# नागवंशको इतिहास सिंजा

**लेखक**

श्री पूर्ण बहादुर बडुवाल/सिजापति

लम्कीचुहा न.पा.-२, बघौरा, कैलाली

**प्रकाशक**

श्री ध्रुवकुमार बडुवाल/सिजापति

**लेखक :- पूर्ण बहादुर बडुवाल/सिजापति**
लम्कीचुहा न.पा.-२, बघौरा, कैलाली

**प्रकाशक :- ध्रुवकुमार बडुवाल सिजापति**
लम्कीचुहा न.पा.-२, बघौरा, कैलाली

संस्करण : वि.सं. २०७६
आवरण पृष्ठ : ऐतिहासिक स्थल सिजा कनका माई सुन्दरी जुम्ला
मुद्रण प्रति : ५०० प्रति

सर्वाधिकार लेखकमा सुरक्षित

मुद्रक : मेरिना अफसेट प्रेस लम्की, कैलाली ९८४८५०११९३, ९८११६८५४६८
डिजाइन : अजय कठरिया
व्यक्तिगत मूल्य : ५०१।-
संस्थागत मूल्य : ७०१।-

# अदित्य मल्लको मूर्ति



अभिलेख-३

## दैलेख जिल्ला प्रशासन कार्यालयमा सुरक्षाका लागि राखिएको आदित्य मल्लको ताम्रपत्र

.......... सिञ्जासमावासितशुभस्थाने । दुवांरदोर्दंडचंडिमसमाक्रान्तदु
र्दान्तविराटपीठाधिष्ठितप्रतिष्ठितेष्टदेवतापरिचर्यापरायण(:) । राजकंसनारायण । रा
जभुजवलमल्लाराजसरस्वतीकंठाभरण । राजकोदंडविद्याजु (र्जु) नराजप्रतापमार्त
(ण्)डप्रतिज्ञापूरणैकपरशुराम(:)। निस्सीमसाहसवीरवेतालविक्रमादित्यप्रभृतिर
विरुदावली विराजमानपरमभट्टारकमहाराजाधिराजपरमेश्वरश्रीमदादि
त्यमल्लदेवः सान्तःपुरः सकुमारः सपरिवारश्चिरं जयतु ॥ राइका पाय भाखा ॥
पसाकि अक्नि । पम्यो जोइसिका कांन्सा चेला । पद्मनाभ । धामु दहुजना ॥
ताम्कु जग्योभाटको आ १ वोहोरा तोला जैसर्मको आ १ वाहि तांमाको आलो १
थापाको हुंदो । एति आला सर्वकर अकर दोहोलिकरि पसाकि अकन्याछु ॥
आदित्य मल्लकि शाखा पसाकर । पम्यो जोइसिकि शाखा भुच दिक्करिकूर्म
कुलाचलफणिपतिविधृतापि चलति वसुधेयम् । प्रतिपन्नममलमनसा न च
लति पुंसां युगान्तेपि ॥१॥ श्रीशाके १२४३ आश्विनशुदि ३ बृहस्पतिवारे ।

अभिलेख स्रोत :

शङ्करमान राजवंशी, नेपाली संस्कृति, सांस्कृतिक संस्थान, २०४५, पृष्ठ ३८
सूर्यमणि अधिकारी, खश साम्राज्यको इतिहास, २०६७, पृष्ठ २१९ (अ.सं.२३)
मोहनप्रसाद खनाल, नेपाली भाषाका हजार वर्ष, २०६८, पृष्ठ ४१ (अ.सं.९)

# समर्पण

१. सत्यमोहन जोशी इतिहासविद् बखुम्बहाल ललितपुर ।

२. पूर्व प्र.मं. श्री लोकेन्द्र बहादुर चन्द, लोकनथली काठमाण्डौं ।

३. पूर्व सभामुख श्री रामचन्द्र पौडेल बोराडाँडी काठमाण्डौं ।

४. पुरातत्व विभाग राम शाह पथ काठमाण्डौं ।

५. प्रतिनिधि सभा सदस्य श्री मोहन बानियाँ बरातु मुगु ।

६. कर्णाली प्रदेश नं. ६ सभामुख राजबहादुर शाही सुर्खेत ।

७. सांसद राजबहादुर बुढा दैलेख क्षेत्र नं.२ दैलेख ।

८. सांसद रामबहादुर विष्ट अछाम क्षेत्र नं. २ टोट्केसाल ।

९. शिवशक्ति श्रीविद्यापिठ उपाध्यक्ष श्री बद्रीप्रसाद लम्साल लम्की, कैलाली ।

१०. रा.स.स. श्री कमला ओली लम्की, कैलाली ।

११. नागवंशी सेवा समाज सुर्खेत ।

१२. नागवंशी सहकारी संस्था लम्की, कैलाली

१३. नागवंशी वडुवाल समाज लम्की, कैलाली

१४. कर्णाली प्रदेशका मुख्य मन्त्री महेन्द्र बहादुर शाही ।



मुख्यमन्त्री

कर्णाली प्रदेश
वीरेन्द्रनगर, सुर्खेत, नेपाल

२०७६/०४/१३



## शुभकामना

कर्णाली प्रदेश नेपाली भाषा, कला र संस्कृतिको उत्पत्तीको थलो हुँदा हुदै पनि इतिहासको गर्भमा लुकेका अथाह तथ्यहरु उजागर गर्न अँझै बाँकी रहेको अवस्थामा कर्णाली प्रदेशको सिजाको पुर्ख्यौली बासिन्दा हाल लम्की चुहा न.पा.वडा न. २ बस्दै आउनु भएका इतिहासकार श्री पुर्ण बहादुर बढुवालले "नागवंशीहरुको इतिहास वंशावली सिजा" नामक पुस्तक लेखी प्रकाशन गर्न लागेकोले अत्यन्तै खुसी लागेको छ। सो पुस्तकले पाठक वर्ग र नागवंशीहरुको प्रभावकारीता वारेमा यथार्थता दिन खोजेकोले यस प्रदेश मात्र नभई खस संस्कृतिको वारेमा अध्ययन, अनुसन्धान गर्न चाहने सम्पुर्ण व्यक्तिहरुका लागी एउटा अमुल्य विधाको रुपमा रहने कुरामा दुई मत छैन। यो पुस्तक कर्णाली प्रदेशको ऐतिहासिक सम्पतिको रुपमा लिदै पुस्तक प्रकाशकलाई पुर्ण सफलताको शुभकामना व्यक्त गर्दछु।

महेन्द्र बहादुर शाही
मुख्यमन्त्री
कर्णाली प्रदेश

# नागवंशी वंशावालीका लागी दुई शब्द

यो नागवंशको वंशावली तथा इतिहासिक पूर्ख्यौलीलाई व्यूझाई देश भरीमा रहे बसेका नागवंशीय परिवारको घर दैलो चाहाँर्दै नागवंशका पूर्ख्यौउली घरसंख्या, नाग वंशको देशविदेशका सिला स्तम्भ, ताम्रपत्रहरुको संकलन गरी ठेगाना सहित सिला स्तम्भका फोटाहरुको संकलन गरी नागवंशको वंशावली इतिहासिक रुपमा २०३८ साल देखि संकलन गरी यो सम्पूर्ण नागवंशीहरुलाई चिन्न चिनाउँन साँचोको रुपमा यो वंशावली भएकोले तपाई पूर्ण ब. बडुवाललाई सधन्यबाद दिदै यो वंशावलीको शुभकामना व्यक्त गर्दछु।

भू. पू. प््रधानमन्त्री
लोकेन्द्र ब. चन्द
लोकनथली भक्तपुर

# नागवंशी वंशावालीका लागी दुई शब्द

यो नागवंशको वंशावली तथा इतिहासिक पूर्ख्यौंलीलाई व्यूझाई देश भरीमा रहे बसेका नागवंशीय परिवारको घर दैलो चाहाँदै नागवंशका पूर्ख्यौउली घरसंख्या, नाग वंशको देशविदेशका सिला स्तम्भ, ताम्रपत्रहरुको संकलन गरी ठेगाना सहित सिला स्तम्भका फोटाहरुको संकलन गरी नागवंशको वंशावली इतिहासिक रुपमा २०३८ साल देखि संकलन गरी यो सम्पूर्ण नागवंशीहरुलाई चिन्न चिनाउँन साँचोको रुपमा यो वंशावली भएकोले तपाई पूर्ण ब. बहुवाललाई सधन्यबाद दिदै यो वंशावलीको शुभकामना व्यक्त गर्दछु।

पूर्व सभामुख
राम चन्द्र पौडेल




# शुभकामना मन्तब्य

यो नागवंशको ईतिहासिक वंसावली नागको उत्पति देखी बस्ती सराई प्रशासन, सस्कार,संस्कृति, धर्म, बंश, प्रहर, शाखा समेत समेटीनाग बंश बसेको घर घर गई नामावली पुर्खेउली, लामो समय लिई,खोज अनुसन्धान गरि किताब तयार गरेको पाउँदा खुसी लागेको छ।

ईतिहास लेखन आफैमा अत्यन्त महत्वपूर्ण कार्य हो। ईतिहास कसैको स्तुतिगान नभई पुर्खाहरुको वास्तविक बलिदान तथा बिरताको प्रतिक हो, नेपाली भाषाको उत्गम थलो,सिजा हो, नाता /साईनो गते तिथि मिति, महिना, बार, दशक, सताब्दि,पटाङ समेत, नागवंसहरुको रचना हो। नागबंसि सम्राटहरुका भारत - बिहार, लधाक, किल्कन गोपेश्वर,वालेश्वर, वाराहट, गयाजी, रामेश्वर, कानपुर, बर्दि केदारनाथ, कानपुर, पिथौडागढ आदी र तिव्वत छर्किगुम्बा, पुस्कान गुम्बा,तौलिङ्गर हुम्ला रेलिङ गुम्बाको ताम्रपत्र, सिजा लामाथाडाका सेरोफेरोका सिला छट्टानका लेख, लुड्कु ३८ फिट चट्टानको लेख बाध्यगौजा, पंचदेवल बझाङ बिनायक दुल्लू किर्तिखम्ब, पईदेवल,पंचदेवल, सुर्खेतको कौक्रेबिहार, पादुका, बौदगुम्बा मुर्ति आदी लेख तथा नागवंसि सम्राटका ताम्र कनक पत्रका लेखक, समेटि बनाएको ऐतिहासिक वंसावलिको लेखहरु भएको नागवंसि बड्डवाल र राष्कोटी शाही संगकोर्को प्रापुर्खा देखिको चलिआएको धर्म कर्म एक जोतोमोतो समेत गरिएको बिषय विवरण समेत उल्लेख भएकोमा लेखक पूर्ण बहादुर बड्डवाल ज्यू लाई धन्यबाद दिदै नागं बंशावली लाई कार्णाली प्रदेश र सभामुखको तर्फ बाट सुभकामना ब्यत्त गर्दछु।

राज बहादुर शाही
सभामुख
कर्णाली प्रदेस सभा
मिति २०७८।१२।१३ गते।



# मन्तव्य

हिमाल, पहाड र तराई-मधेसको संयुक्त रुप हो 'नेपाल' । सृष्टिकै प्रारम्भिक कालदेखि हिमालका ती उच्च र दिव्य हिमचुचुराहरुले स्रष्टाको सगौरव गुणगान गर्दै आइरहेकै छन् , **यथा – यस्य मे हिमवन्तो महित्वा' । ऋग्वेद :** १०।१२१।४

नेपालमा बस्ने सबैजना हामीहरु (सबै जाति, जनजातिहरु) नेपाली हौं । हामीहरुका सभ्यता, संस्कृति र जीवनपद्धतिलाई विकसित गर्ने ती हाम्रा पुर्खाजनहरु हिमालकै फेदी, बेंसी, पाखा, पखेरा, उपत्यका र तराई-मधेसमा जीवन यापन गरेर बस्दथे र आज पनि बसिरहेकै छन् ।

नेपालवासी हामीहरुको कुल, वंश, गोत्र आदिको उत्पत्ति, संस्कृति र इतिहासको अध्ययन, अन्वेषण र अनुसन्धानको चर्चा परिचर्चा हुने बेलामा एउटा सबभन्दा ठूलो खट्किने कुरो हो हाम्रो इतिहास अझै अपूरो र अधुरो नै छ, हामीहरुको राष्ट्रिय इतिहास देखा पर्न सकेको छैन । विशेषतः हामीहरुको इतिहासको लेखन कार्यले गति लिन नसकेको हुन सक्छ ।

उक्त परिप्रेक्ष्यमा 'नेपाल, दि डिस्कभरी अफ मल्ल' **(Nepal, The Discovery of Malla)** का लेखक इटालियन पुरातत्वविद् जुसेप्पे टुची (पश्चिम नेपाल र तिब्बतका हिमाली अभियानमा लामो समय अन्वेषणमा खर्चिसकेका विद्वान्) ले व्यक्त गरेका उनको भनाइ यहाँ उद्धृत गर्न (पेज ५०-५१ बाट) प्रासङ्गिक हुन आउँछ, यथा– " .......तर मैले मेरो अन्वेषणको अभियान यसरी सफल होला भनेर मनमा चिताएको पनि थिइँन अथवा पूर्ण रुपले बिर्सिएर लोप भैसकेको एउटा साम्राज्य सयौं सयौं बर्षसम्मको चुपचाप पछि यसरी आफ्ना इतिहासका प्रशस्त सामग्रीहरुसहित देखा पर्ला भनेर तर वास्तवमा यस्तो साम्राज्य थियो, अनि यो हो मल्लहरुको साम्राज्य । यी मल्लहरुले पश्चिमी नेपाल खण्डमा बाहेक पश्चिमी तिब्बत खण्डमा पनि शासन गरेका थिए । यस कुराको पत्ता लाग्नाले हामीले विचार गर्ने गरेका धेरै कुराहरुमा परिवर्तन ल्याइदिएको छ । वास्तवमा तिब्बती इतिहासकारहरुबाट हामीले थाहा पाउने गरेका पश्चिमी तिब्बत खण्डका राजाहरु तिब्बती देशका मानिस रहेनछन् । ती राजाहरु त वास्तवमा यिनै मल्लहरु थिए यसले आफ्ना राज्यलाई हिमालको उत्तरसम्म पनि बढाउन पुगे । यी मल्ल राजाहरुले आफूहरुले चलाएको शासन आफ्ना तिब्बती जनतालाई मान्य हुने होस भन्ने हेतुले आफूहरुले पनि बौद्ध धर्म ग्रहण गर्न पुगे अथवा ग्रहण गर्नमा इच्छुक बने । फेरि यी मल्लहरुले मानसरोवर र कैलाशतिर जाने भारतीय यात्रीहरुका लागि पनि मार्ग नियन्त्रण गरेको हुनाले धेरै सम्भव छ यिनीहरुले ताक्लालुङको नामी सुनखानीलाई उपयोग पनि गरे ।

"..............वास्तवमा मल्लहरुको त्यस साम्राज्यले इटाली भन्दा पनि ठूलो भूभागमा तीन सय वर्ष सम्म आफ्नो प्रभुत्व कायम गरेका थिए ।"

वास्तवमा माथि उल्लेख भएका मल्ल राजाहरु पश्चिम नेपाल कर्णाली सिंजाखोला उपत्यका नागवंशीय क्रममा देखा पर्ने तथा सोसँग सम्बन्धित सिजापती, मल्ल, बडुवालहरुका वंश र ऐतिहासिक रुपहरुमा लुप्त भैराखेका इतिहासका पानाहरु पनि महत्वपूर्ण हुन सक्छन् ।

अतः "नागवंशको वंशावली तथा इतिहास : सिंजा" का तत्वान्वेषक विद्वान् लेखक **(Research Scholar) पूर्णबहादुर बडुवाल** सिजापतीले अथक मेहनत गरी तयार पार्नुभएको यो कृति नेपालको राष्ट्रिय इतिहासको लेखन कार्यमा उपयोगी सिद्ध हुन सक्छ । लेखक महोदय धन्यवादको पात्र हुनुभएको छ । अस्तु ।

सत्यमोहन जोशी

सत्यमोहन जोशी
बखुंबहाल, ललितपुर
२०७६ आषाढ ५ गते

रामबहादुर विष्ट
सांसद
प्रतिनिधि सभा
संघीय संसद, नेपाल



Ram Bahadur Bista
Member of Parliament
House of Representatives
Federal Parliament, Nepal

"हार्दिक शुभकामना"

नागवंशको वंशावली सम्बन्धी प्रथम पटक किताब प्रकाशन हुन लागेकोमा मलाई अत्यन्तै खुशी लागेको छ। देशभरीका नागवंशी परिवारहरूको घर-दैलो चाहार्दै नागवंशका पुर्खौउली घर संख्या, नागवंशको देश विदेशका सिला स्तम्भ, ताम्र पत्रहरूको संकलन गरी ठेगाना र फोटोहरू समेत दर्शिने गरि यो वंशावलीको इतिहासको रूपमा वि.सं.२०३८ साल देखि संकलन गर्दै आउनु भएका तपाई पूर्ण बहादुर बडुवाल लाई स- धन्यवाद दिँदै शुभकामना व्यक्त गर्दछु।

रामबहादुर विष्ट
०७४।१२।२२

रामबहादुर विष्ट
सांसद
प्रतिनिधि सभा सदस्य
संघीय संसद, नेपाल

Mobile : 977-9849679988, Fax No: 977-1-4200136, Email : ncparliamentary@gmail.com

## दुइ शब्द

नागवंशको वंशावली परापूर्वकाल तथा संस्कार रितिरिवाजमा कायम रहि आएको वंश,गोत्र,प्रहर र शाखालाई मान्दै आइरहेका कुरालाई मान्यता दिदै नागवंशीहरुको घरघरमा गई सुझाव,सल्लाह घर,लगत र पुर्ख्यौली चार्ट बनाई लामो समय देखि कार्यरत रही यो ऐतिहासिक वंशावली निर्माण गर्नुभएकोमा तपाई पूर्ण ब.बडुवाल लाई धन्यवाद दिदै हार्दिक शुभकामाना व्यक्त गर्दछौ ।

..........................

**कमला ओली**

राष्ट्रिय सभा सदस्य

क्षेत्र नं.२,कैलाली ।

# नागवंशी वंशावालीका लागी दुई शब्द

यो नागवंशको वंशावली तथा इतिहासिक पूर्ख्यौलीलाई व्यूझाई देश भरीमा रहे बसेका नागवंशीय परिवारको घर दैलो चाहाँर्दै नागवंशका पूर्ख्यौउली घरसंख्या, नाग वंशको देशविदेशका सिला स्तम्भ, ताम्रपत्रहरुको संकलन गरी ठेगाना सहित सिला स्तम्भका फोटाहरुको संकलन गरी नागवंशको वंशावली इतिहासिक रुपमा २०३८ साल देखि संकलन गरी यो सम्पूर्ण नागवंशीहरुलाई चिन्न चिनाउँन साँचोको रुपमा यो वंशावली भएकोले तपाई पूर्ण ब. बडुवाललाई सधन्यबाद दिदै यो वंशावलीको शुभकामना व्यक्त गर्दछु।

..........................................

संघिय प्रतिनीधि सभा सदस्य श्री मोहन ब. बानियाँ

श्रीकोट, वरातु , मुगु

..........................................

संघिय प्रतिनीधि सभा सदस्य श्री राज ब. बुढा

जम्बुकाँद, दैलेख

# शुभकामना मन्तव्य

नेपालका विभिन्न ऐतिहासिक सांस्कृतिक र पुरातात्विक महत्वका स्थलहरु मध्ये कर्णाली क्षेत्र पनि एक हो । यस क्षेत्रको प्राचीन इतिहास त्यति स्पष्ट रहेको पाईदैन । पूर्व मध्यकालदेखि यस कालको इतिहास बारे जानकारी दिने क्रमहरु प्रशस्त मात्रामा पाइन्छन् । १०।११ औं शताब्दी तिर हाल जुम्ला जिल्लाको सिंजालाई केन्द्र विन्दु बनाई नागराजले खस मल्ल राज्यको स्थापना गरेका थिए । नागराजको बारेमा खासै ऐतिहासिक आधारहरु नपाईएता पनि खसमल्ल राजा क्राचल्लको समयदेखिका अभिलेखहरु भेटिन्छन् । क्राचल्ल पछि असोक चल्ल, जितारी मल्ल, आदित्य र पृथ्वी मल्ल जस्ता शक्तिशाली खसराजाहरुले कर्णाली क्षेत्रमा कला, वास्तुकला, भाषा, साहित्यको विकासमा महत्वपूर्ण भूमिका खेलेका थिए । यसरी कर्णालीको मध्येकालीन इतिहासमा महत्वपूर्ण भूमिका खेल्ने राजाहरुलाई नागवंशको भनि ऐतिहासिक वंशावली नामक किताव पूर्ण बहादुर वडुवाल (लम्कीचुहा न.पा.-२ वचौरा, कैलाली) ले प्रकाशन गर्न लाग्नु भएको विषय निकै नै प्रशंसनीय छ ।

नाग वंशको उत्पत्ति देखि वसाइ सराइ प्रशासन समेत र गोत्र वंश समेत समेटी लामो समय सम्मको खोज, अनुसन्धान गरी किताव तयार पार्नु भएकोमा खुसी लागेको छ ।

यस पुस्तकको अध्ययनबाट नाग वंशको वारेमा खोज अनुसन्धान गर्ने अध्येता,इतिहास प्रति रुची राख्ने पाठकवर्ग सबैलाई टेवा पुग्नेमा दुईमत नहोला । यो पुस्तक प्रकाशन गर्न लाग्नु भएकोमा मलाई समेत शुभकामना मन्तव्य राख्न दिनुभएकोमा आभार प्रकट गर्दछु साथै यसप्रकारको कार्यहरुको निरन्तरताको लागि कामना गर्दै यस प्रशंसनिय कार्यका लागि मेरो र पुरातत्व विभागको तर्फबाट धन्यवाद सहित शुभकामना व्यक्त गर्दछु ।



दामोदर गौतम
का.मु. महानिर्देशक

दामोदर गौतम
का.मु. महानिर्देशक

# शुभकामना

हाम्रो पश्चिम नेपाल परापूर्व कालदेखि नै कला, संस्कृति र इतिहासको रहस्यमय थलो बनेको छ। प्राकृतिक विविधता, भौगोलिक विविधता र धर्म, भाषा, जातीय विविधताले यस देशको प्राचीन इतिहास अत्यन्त गौरवमय छ। हाम्रो इतिहासको खोजी हामीले नै गर्यौं भने सत्यतथ्य बाहिर ल्याउन सकिन्छ। यस प्रसङ्गमा अहिले पछिल्लो चरणमा अनेक जातजातिका अगुवाहरुले आ-आफ्नो भाषा, संस्कृति तथा जातिय स्वाभिमानको इतिहास खोज्ने र लिपिबद्ध गर्ने होडबाजी चलेको छ। यसमा धेरै सफलताहरु पनि प्राप्त भएका छन्। नेपालको निर्माणभन्दा अघि नै यो क्षेत्र एक परिपक्व सभ्यता, कला, संस्कृतिको अलौकिक भूमि रहेका तथ्यहरु प्राप्त हुँदैछन्।

यसै सन्दर्भमा श्री पूर्णबहादुर बडुवालको सतत प्रयासबाट नागवंशी बडुवालहरुको नालीबेली केलाउने काम भएको छ। नागवंश परम्पराको प्राचीन इतिहास र सिँजा साम्राज्यको सोधीखोजीको सङ्कलनबाट नागवंशको ऐतिहासिक चिनारीको लागि तयार पारिएको यस **"नागवंशको वंशावली तथा इतिहास : सिँजा"** नामक पुस्तिकाले नागवंशको पुरानो इतिहास केलाउन सघाउने छ। अन्वेषक श्री पूर्णबहादुर बडुवालले यसको परिमार्जन पछिल्ला संस्करणहरुमा गर्दै जानुहुनेछ भन्ने विश्वास लिएको छु। पुस्तक प्रकाशनको यस सुखद अवसरमा नागवंशी मित्रहरुमा हार्दिक शुभकामना।

हाम्रो कर्णाली प्रदेशको इतिहास जति खोज्यो त्यति रहस्यमय छ, जति भेट्यो उति गौरव गर्न लायक छ। इतिहासको अनन्त अन्वेषणमा यसले मार्गदर्शन गर्न सघाओस्। अस्तु।

बद्रीप्रसाद लम्साल
उपाध्यक्ष
शिवशक्ति श्रीविद्यापीठ लम्की
लम्कीचुहा न. पा. १, कैलाली

# शुभकामना

मानव जातिको उत्पति संगै विकास र रक्षाको लागि परिवार संगठित अवस्था देखी सनातन कर्मकाण्ड बमोजिम मानि आएको भएको वंश गोत्र परहर, शाखा वंश, नाग गोत्र कौशिल्या, पञ्चै परहर मध्यान्नी, शाखा चलिआएको देश भरका नागवंशीहरुको घरदैलो भेटघाट गरि सल्लाह र सुजाव लिई घर संख्या र पुख्यौली तालिका बनाइं नागवंशीहरुको ऐतिहासिक वंशावली लामो समय देखी सुझाव संकलन गरि हाम्रा अग्रज पूर्ण बहादुर वडुवालको अनवरत मेहनतका लागि हार्दिक आभार प्रकट गर्दै, वंशावली जस्तो गहन विषयको अध्ययन गरि प्रकाशित गर्न सफल हुनु भएकोमा हार्दिक सफलताको शुभकामना सहित उक्त कार्यको लागि धन्यवाद दिन चाहान्छौं ।

**अध्यक्ष**
छत्र वडुवाल
तरङगा–२, सुर्खेत

**सचिव**
विर्ख बहादुर वडुवाल
चौकुने–१, धनरास, सुर्खेत

**सल्लाकार**
बल बहादुर सिजापति
ठाँटीकाँध–४, गैरागाउँ, दैलेख

लाल बहादुर सिजापति
आठविस–९, छेपाडी, दैलेख

मोहन वडुवाल
चौकुने–२, सुर्खेत

शरण बहादुर वडुवाल
कनका सुन्दरी–५, वडुवालवाडा, सिजा, जुम्ला

**नागवंशी सेवा समाज परिवार**
**कर्णाली, प्रदेश**



सहकारी ऐन २०४८ अनुसार स्थापित

दर्ता नं.: नि.स.डि.द.नं. ७७०/०७०/०७१

# नागवंशी बचत तथा ऋण सहकारी संस्था लि.



लम्कीचुहा नपा-१, लम्की, कैलाली

पत्र संख्या : ७८/७९

चलानी नं. : ४८

मिति : २०७८/०४/०१

श्री.................................................ज्यू,

.................................................

विषय :

प्राकृतिक विविधतायुक्त हिमाल, पहाड तराई मा बसोबासगर्ने बहुजाति, बहुभाषी बहुधार्मिक, बहुसांस्कृतिक पहिचान भएको राष्ट्र नेपालको भाषाको उत्पत्ति भएको जुम्ला सिंजा उपत्यकाबाट फैलिएका विभिन्न भू-भागमा वा अन्य मुलकहरुमा स्थायी-अस्थाई बसोबास गरीरहनु भएका सम्पूर्ण नागवंशी बडुवालहरुलाई अतीत आउने भोलीका सन्ततिलाई आफ्नो वंश अतीत पारिवारिक अपनत्व अवगत गराउने उद्देश्यले "नागवंशी को वंशावली तथा इतिहास" तयारगर्नुहुने शिक्षाको क्षेत्रमा अनुकरणीय योगदान पुर्‍याउनु भएका लेखक पूर्ण ब० बडुवाललाई हार्दिक धन्यवाद सहित पुस्तक नागवंशीको चिनारी बनोस् शुभकामना ।

सचिव : अम्बर ब० बडुवाल

(हस्ताक्षर)

## दुइ शब्द

नागवंशको वंशावली परापूर्वकाल तथा संस्कार रितिरिवाजमा कायम रहि आएको वंश,गोत्र,प्रहर र शाखालाई मान्दै आइरहेका कुरालाई मान्यता दिदै नागवंशीहरुको घरघरमा गई सुझाव,सल्लाह घर,लगत र पुर्ख्यौली चार्ट बनाई लामो समय देखि कार्यरत रही यो ऐतिहासिक वंशावली निर्माण गर्नुभएकोमा तपाई पूर्ण व.बडुवाल लाई धन्यवाद दिदै हार्दिक शुभकामाना व्यक्त गर्दछौ ।

| | | | |
|---|---|---|---|
| ............ | ............ | ............ | ............ |
| दिपक वडुवाल | राम ब.वडुवाल | दुर्गा वडुवाल | भगत वडुवाल |
| क्षेत्र नं.२,कैलाली | ऐ | ऐ | पूर्व ~~सम्मोस्द~~ सभासद |
| | | | क्षेत्र नं.२,कैलाली |

# प्रकाशकीय

वंशावली वंशको इतिहास राष्ट्रको गहना हो, एउटा विद्वानले भनेका छन् । "वंशावली विना जान रहदैन " इतिहास विना देश रहदैन, भन्ने कुरा सत्य साँचो हो, भन्ने अवतग भयो, इतिहास राष्ट्रको र वंशावली वंश, शन्तानको सोजो हो । तसर्थ नागवंशी परिवार कहाँ-कहाँ, कसरी, के कति ठाउँ गाउँमा कतिपरिवर, कस्तो रितिरिवाज, भाषा भेष, संस्कार संस्कृतीका आधिकारिक माँनेता प्राप्त गरेका छन् कहाँबाट बसाईसराइ भएको हो । यी व्यवहार आ-आफ्नो संस्कार गाउँठाउँको रितिरिवाजमा रहेका भएता पनि वंशजको नाताले जहाँ बसेता पनि हामी परिवार हौं, पारसपर वन्धुत्व कायम हुनु पर्छ । आजको युगमा विश्व नजिकिदै छ त्यस्तै मानिस पनि वन्धुत्वको नजिकिएको हुन्छ । हाम्रा घरहरु गाउँहरु नाता नातेदारहरु वन्धुत्व तथा मित्रताको शिखरमा भाइचाराको विकास हुने हुन्छ । मेरो शब्द हामफाली हाम्रो शब्दको वृद्धिहरु, सामाजिक विकास हुनु हो । सामाजिक विकासले कुल वंश तथा राष्ट्रको विकास चेतनाको विकास हुन्छ । दया, माया, करुणा, सदभाव र पारस्पारिक सहयोगको सहयोगी भावना उत्पन्न हुन्छ । हाल पूर्व, पश्चिम, उत्तर र दक्षिणका नागवंशी वन्धुत्वको भेटघाट, चिनजान, माया, ममता भई आईरहेको छ । घर-घरव्यक्ति पिक्षे संबाद, सहर्षता, ममताको भावना सबैको हृदयमा पलाएको छ । अझ भेटघाटको, बसउठको कमिलाई विकसित गर्दै लैजानु पर्ने आवश्यकता हाम्रो अगाडी आइरहेको छ । सामाजिक विकासमा वंशको गोडमेल भावना पछि पर्नु हुँदैन । वंश, राष्ट्र र धर्म जोगाउनको मनभावना लाई अग्रपंतिमा उजाग्रत गराउनु प्रमुख कर्तव्य हुन्छ नाता, मित्रता कायम राखी आ-आफ्नो कर्म कर्तव्य पालना गर्नु परम धर्म हो ।

इतिहास भनेको देश, वंश तथा सम्वन्धित व्यक्तिको जिउदो गहना हो । त्यसले राष्ट्र, वंशको जीउदो उपहार हो, अध्यारो रातमा कहाँ के छ थाहा हुँदैन । उज्यालो प्रकाशले छर्लङ्गै देखाउछ । त्यस्तै इतिहासले, मानिसलाई म, मेरो इतिहास (पुर्खा) कस्तो छ भनि सिसामा हेरे झै प्रष्ट पार्छ, त्यसैले राष्ट्र वंशको इतिहाँस सिसा हो भन्ने मान्नु, बुझ्नु, महान शिक्षा हो । नाग वंश छरिएर रहेको कुलिए, वंशिय परम्परा साथै प्रापूर्व कालको काम, धर्मको बारेमा थाहा पाउनु नै इतिहास हो । त्यसैले यो विभिन्न कालखण्डका विभिन्न तह तप्काका राजनैतिक, सामाजिक, आर्थिक क्रियाकलापको अवगत हुने, गराउने साधन इतिहास ठानि विभिन्न व्यक्तिले इतिहासमा उल्लेख भएका गरेका नाग वंशको बारेमा जानकारी भएको विवरण समेटि एकत्र रुपमा यो नाग वंशी सिजापति, बरुवाल/वडुवाल, खसपति, जावेश्वर, जुम्लेश्वर, हिमाल राजा, इन्द्र सोरुपी, पूर्व उत्तर सम्राट, वतासे सम्राट भनि देशविशेषका शिला स्तम्भका लेखको आधारमा नाग वंशको क्रमाङ्क रुपले वंशावली तथा इतिहासको रुपमा तयार पारिएको छ ।

श्री ध्रुवकुमार वडुवाल/सिजापति
लम्कीचुहा न.पा.-२, बघौरा, कैलाली

# लेखकका दुई शब्द

प्रदेश नं. ६, दैलेख जिल्ला आठबिस न.पा. वडा नं. ८ तिलेपाटा गाउँमा वि.सं. २००५ साल पौष १९ गते वुवा धनरुप बरुवाल, आमा राजेन्द्र वरुवालको कोखबाट माइलो सुपुत्रको रुपमा जन्म भई वाल्यकाल देखि सिंजारुपरेखा, कर्णाली लोकसंस्कृति र इतिहास, ५०० वर्ष खस राज्यको इतिहास, सिंजाको डोरेटो, मध्य कलिन इतिहास, अछामको इतिहास, बृहत जुम्लाराज्यको इतिहास, संधि-संग्रह र संधिपत्र, कुमाउको अशोक इतिहास, पद्मावति विन्द्रावनको इतिहास, कुमाउ गडुवालको इतिहास लगायतका इतिहासहरुको अध्ययन र लामाथाड सेरोफेरोमा भएका सिलालेख, नराकोट, देवाररुख स्तम्भ लेख, वरुवाल वाडा, सिला राराताल सेरोफेरो र दुल्लूमा रहेको कृर्ति खम्वा, मुन्डेदेवल, पन्चदेवल, पादुका वौद्ध मूर्ति, डङ्गसुर पन्चसिला लेख, साताला पन्चसिला लेख तथा कालिकोट लुर्कु र चौकी खोला लेख, जिल्ला प्रशासन कार्यालय दैलेख मा रहेको वौद्धमूर्ति तथा ताम्रापत्रहरु र अछाम कुच्ची विहार मुंग्रा, विनायक पन्चदेवल, दर्ना पन्च सिला लेख, कालीकोटको राष्कोट चुत्रीकोटको पंन्चशिला लेख आदि समेत प्रत्येक्ष अवलोकन तथा अध्ययनबाट नाग वंशको वंशावली र इतिहास नामाक यो पुस्तक लेख्ने भावनामा प्रेररित भई यसैमा निहित रहि देश भरीका नाग वंशी मेरा वरुवाल/वडुवाल वंन्धुहरुको घरदैलोमा समेत पुगी उहाँहरुबाट प्राप्त लोकोत्ति र रायसुझाव समेतको संकलनबाट यो पुस्तक प्रकाशन गर्न गइरहेको छु। यस प्रकाशनमा घर व्यवहार मिलाई मलाई लेखन कार्यमा अवसर मिलाउने मेरो श्रीमती भावना बडुवाल, छोराहरु धुव, कल्याण, खगेन्द्र र छोरीहरु देब कु. बडुवाल (बोगटी) र सिता कुमारी बडुवाल मेरा धन्यवादका पात्र छन्।

यो पुस्तक प्रकाशनमा सहयोग गर्ने अम्बर बहादुर बरुवाल पोखरा, डा. हुम बहादुर बरुवाल (वरुवाल/वडुवाल समाजका अध्यक्ष), नेत्र बहादुर वरुवाल (पूर्व प्रहरी निरिक्षक) झापा शिव सत्ताक्षी न.पा. २ धरमपुर, पुष्प बहादुर वरुवाल/वडुवाल समाजका महासचिव), पूर्व प्रहरी निरिक्षक हरि बरुवाल, लामा चौर पोखरा (वरुवाल/वडुवाल समाजका उपाध्यक्ष), पूर्व सभासद भगत वडुवाल लम्कीचुहा न.पा. ५ कैलाली, दिपक बडुवाल (नागवंशी स.स.लि.का अध्यक्ष) लम्कीचुहा न.पा.-१ कैलाली, धन बहादुर बरुवाल कठमाण्डौं, भिम बहादुर बडुवाल घोडाघोडी न.पा.-३ कैलाली, शरण बडुवाल कनकामाई सुन्दरी गा.पा.-४ सिजा, विक्रम बडुवाल ठाकुरबाबा न.पा.-८ बर्दिया, रण बहादुर बडुवाल ठाकुरबाबा न.पा.-८ बर्दिया, दुर्गा बडुवाल लम्कीचुहा न.पा.-१ लम्की, कैलाली, राम बहादुर बडुवाल लम्कीचुहा न.पा.१, कैलाली, मोहन सिंह बडुवाल सुर्खेत उ.म.न.पा.-८, खड्ग बहादुर सिजापति नारायाण न.पा.-दैलेख कुसाँणा, कृष्ण बहादुर वरुवाल झापा शिव सात्ताक्षी न.पा.-२ धरमपुर लगायत र म प्रति सुभेच्छा राख्नेहरु सबैलाई धन्यवाद दिन चाहन्छु । पुस्तक लेख्दाको सहयोगी खड्ग बहादुर वडुवाल कन्चनपुर मजगाउँ, धन बहादुर वरुवाल मोरङ, हरि बहादुर वरुवाल कास्कि पोखरा, दिर्घ बहादुर वरुवाल म्याग्दि, तेज बहादुर, हुम बहादुर बरुवाल

म्याग्दी, परेग वडुवाल सिजा ऐ. वासी रत्न बहादुर, गोर्ख बहादुर, मान बहादुर, राज वहादुर, गोरख वडुवाल आदि, वर्दिया रण बहादुर वडुवाल, विक्रम बडुवाल, मोती वडुवाल कैलाली, केशव वडुवाल, रण बहादुर वडुवाल बाजुरा, पदम बहादुर वडुवाल/बाजुरा महोन वानिया (वडुवाल) मुगु, वुद्धि वडुवाल डोल्पा, जित बहादुर, राम बहादुर वरुवाल, नेत्र बहादुर, कृष्ण ब.वरुवाल रामेछाप यहाँहरुलाई धन्यावाद व्यक्त गर्दछु । वरिष्ठ इतिहासकार श्री सत्यमोहन जोशीज्यूले नाग वंशको सिजा इतिहासलाई सही मार्ग दर्शन दिँदै आउनुभएकोले वहाँलाई हार्दिक धन्यवाद दिन चाहन्छु । शुद्धाशुद्धि हेर्न सहयोग गर्ने शिवशक्ति श्रीविद्यापीठका उपाध्यक्ष श्री बद्रीप्रसाद लम्सालज्यू लाई स-धन्यवाद, क्रम मिलान सुधारका श्री तप्तराज तिमिल्सेना ज्यूलाई धन्यवाद । यो पुस्तकको भाषा सुद्धसुद्धिका लागि सहयोग गर्ने पूर्व शिक्षक द्वय श्री बद्री प्रसाद लम्साल ज्यू, श्री तप्तराज तिमिल्सिना ज्यू लाई र प्रकाशनमा डिजाइन गर्ने अजय कठरिया, मेरिना अफसेट प्रेस, लम्की, कैलालीको सञ्चालक श्री जोधीराम चौधरी समेतलाई धन्यवाद दिनचाहन्छु ।

अन्तमा यस पुस्तकको प्रिन्टिङगमा हुन सक्ने सानातिना त्रुटिहरुमा क्षमा याचना गर्दै समय सापेक्ष यस पुस्तकलाई परिमार्जन गर्दै लैजाने सुभेच्छ राख्दै आफ्नो भनाई अन्त गर्दछु । जय नाग देवता !

श्री पूर्ण बहादुर बडुवाल
लम्कीचुहा न.पा.-२, बघौरा, कैलाली

# टिप्पणी

आदरणीय सिजापति/वडुवाल/वरुवाल वन्धुहरु एवं सम्पूर्ण सिंजा वासीहरु सदैब स्वागत गर्दछु। सिंजा राज्य आज सम्म गुम्रीएको रहेको सिंजामा चीन, भोट, भारत र पश्चिमी नेपालको कर्णाली, गण्डकी, कुमाउ, गडवाल समेत सिंजा राज्यमा समावेश भएको देखियो र यी प्रदेश सहितको सिंजाको वर्णन पहिलो राज्य, ठूलो राज्य, कानूनी राज्य, साथै भाषा, नाता, तिथि, मिति, वार, गते, महिना, वर्ष, दशक, सताप्दी समेत सिंजा नागराजद्वारा उत्पती भएको विभिन्न इतिहासद्वारा अवगत भयो।

उक्त देशहरुमा नागवंशका अजम्वरी इतिहासका लेख (कीर्ति) ले सिंजा र सिजापतीलाई उच्च गतीमा पुऱ्याएको देखिन्छ। यस्ता, यस्तो अनन्त कीर्तिहरुलाई नव्युभाई सुतेको थाति रहेको पाइयो। विभिन्न देशका इतिहास अध्ययन गर्दा मलाई उत्सुकता लागि लामो समय देखियोवंश र यी कीर्तिका पछि लागे।

छरिएका दानाहरु समेटे झै यसका म्याट्रियलहरुको धावन्ते (पछि) लागें। रुसको मास्को नागप्रतिको निर्णय, इजारायल नाग वंशको ठूलो नगर समेत माथि उठाई, सिंजा खस राज्य, खस सम्राट, खस वासी खस ठाउँ लेखेको कुरालाई हामफाली सिंजा नाग प्रदेश, खास राज्य, खास सम्राट, खास वासी हुन भन्ने उक्त समितिको निर्णय सावित देखिन्छ।

नागराजको कालमा काशी, गयाजी, उत्तर भोट महाचीन सिंजा राज्य अन्तर्गत रहेकोले नागराज अशोक चल्ललाई आकाशे राजा, हिमाल राजा, छत्रपती राजा, इन्द्र सरह समान भन्ने लेख पाइएका छन् त्यसैले खस देश, खस राज्य, खस सम्राट, खस वासी भन्नु नहुने। व्यक्ती भूगोल खस हुदैन। कुनै चिज हात देखि खस्नु, भुमी पैरो खस्नु, रुख देखि खस्नु मृत्यू हुनलाई खस भनिन्छ। व्यक्ति र भूगोल खस हुदैन भन्ने रुसको इतिहास विदहरुको निचोडले औल्याइरहेको छ।

सिजापती राजाहरु जितारी मल्ल, रिपु मल्ल र आदित्य मल्लले काठमाण्डौं उपत्यकाका नेवार मल्ल राजा माथि चढाई गरेकोले जितारी नागले नक्कली मल्ल पद घोषणा गरेका थिए। नागका देव, चल्ल, सिजापती, मल्ल, पाल, वानिया, वडुवाल/वरुवाल पदहरु जात थर प्रयोग भएका छन्।

नागराजाहरुले मनोपोली २१ वंशहरु लेखेको पाइयो/धेरै भाग व्यक्ति र ठाउँको नामलाई वंश भनेको पाइयो। बुवा एक वंश, छोरो अर्कै वंश यो त हुदैन। जस्तै:- गेला वंश, सिंजा वंश, गुगे वंश, खारी वंश, श्रीपाली वंश, ऋकसिङ वंश, मालिका कोट वंश, आदित्य वंश, यदु वंश, समुन्द्र वंश, गौण वंश आदि यी व्यक्ति र ठाउँका नामलाई वंश भनी लेखेको पाइन्छन्। यसको विकल्पमा कीर्ति खम्ब, पञ्च देवल, मठ मन्दिर गुम्बा, स्तम्भ जस्ता विषयवस्तुका लेखलाई मात्र मान्यता दिई यो सिजापति नागवंशीको वंशावली/इतिहास अविरोपित गरिएको छ/यसमा कुनै त्रुटी भएको खण्डमा पुन: समावेश गर्नेगरी यो सिंजा र नागवंशको वंशावली तयार गरिएको छ। कुनै टुट छुटमा भएको गल्ती क्षमा प्रार्थी हुदै म पूर्ण ब. बडुवाल/सिजापति विदा हुन्छु।


श्री पूर्ण बहादुर बडुवाल

लम्कीचुहा न.पा.-२, बघौरा, कैलाली

# विषय सूची

# मानव आफ्नो कर्म र कीर्तिका आधारमा

मानव आफ्ना कर्मर कीर्तिको आधारमा वास्ताविक मानवका रुपमा उपस्थित हुने, हुँदा, जुनजुन मानिसले जुन जुन कार्यमा दक्षता हासिल गरे त्यसै कर्मलाई सृष्टिको उत्पति इतिहाससंग जोडेको हुन्छ।

भानुभक्त :

जिउदै मरेको भनि नामछ जसको, उद्यम विना वित्तद छ काल जसको ॥

यीं पंक्तिहरुमा पनि मानिसले उद्यमकार्य गरेर आफूलाई मानवको रुपमा उभ्याउन सक्छ, अन्यथा उद्यम अर्थात कर्म विद्यामा मुर्दा तुल्ले हुन्छ भनी सन्देश दिन खोजेका छन्। यस्तै मूल मर्मका आधारमा व्यास ऋषिले सृष्टि उत्पतिको कथा लेखनु भएको छ। पराशर नन्दन कृष्ण द्वैपायन व्यासजीले स्कन्द पुराणको केदार खण्डमा, सृष्टि उत्पतिको व्याख्या गरे बमोजिम व्रह्माजीका मानव युग कश्यप ऋषिको थुप्रै पत्नीहरु मध्य दशकन्या कद्रुका उदवारबाट नागवंशको उत्पति भएको छ। महाभारतको अस्तिक पर्वमा उल्लेख छ।

नाग वंशी वरुवाल/विष्णु भगवानले समुद्रमा विष, अमृत पतालगाउन सिमेरु पहाडको मदानी, वासुकी नागको सर/नेतीले समुन्द्र मथन गर्दा ज्वाला कन्टा उठी वरनल भने, त्यसैमा मानिस जन्मियो त्यसलाई वरनल जातिका मानिस भने। जिव्राको तालिकाले वरनलको वरुवाल भयो समुन्द्रका किनारमा वरनल जातको गाउँवस्तिछ भन्ने महाभारतमा उल्लेख छ भनिएको छ। तर विना माउको बच्चा हुँदैन। त्यस्तै कन्द्रु कस्यप ऋषिकी पत्नीबाट नागवंशी वरुवालको जन्म भन्ने असम्भव लाग्छ। वालक जन्मदा घडि नक्षत्र आदि वाट वालकको नाउ राखिन्छ राशि खुल्छ। वरनलबाट र कद्रु ऋषिको पत्नी यी दुवैबाट वरुवाल नागवंशको उत्पती भयो भन्ने कुरा असम्भव लाग्छ।



# कर्णाली प्रदेशको इतिहास ।

अब नेपाली नागरिक ड्रानियल राइटले वाजी अनुमान अन्धधुन्द हिसाबले टिप्पणी गरेको देखियो। ठाउँ सिजाखस, राज्य राजा, जनसमूह, खस लेखेको पाइयो । यसो विचार गर्दा यो भन्दा पहिल्य क.अ. सिजाराज्यको इतिहास छोइएको पाइएन काठमाण्डौं उपत्यका नेवारले मल्ल राज्य माथि नागराजा जितारि, रिपु र आदित्य राजा महाराजाहरुले उत्तर दक्षिण हातपसारी (हातहालि) उत्तर भोट, चीन हुदै गुगे खारि मानसरोबर चहारदै सिजा राज्य स्थापना गरेका दक्षिण गढवाल कुमाउ, बद्रि केदार, गोपेश्वर काँसीवाराहाट गयाजीउ पत्यगा लधाक किल्कीरामेश्वर कानपुर, कुमाउ बाग्यश्वर पिथौडागढ आदि स्थानका नाग सम्राट, काचल्ल अशोक चल्ल र नागदेवका शिला स्तम्भले के कस्तो दृष्य लिन्छ। त्यो ऐतिहासिक क्षेत्र हो। इतिहास हातहाल्दा अथवा विदेशीहरुलाई त्यस देशको आर्थिक, सामजिक, राजनैतिक, रहनसहन, वातावरण तथा सस्कार, संस्कृति, रितिथितिको मूल्य र मूल्याङ्कन आदि भोलिका इतिहासलाई ख्याल गर्ने जमर्को नगरी दुर दर्सीता हुदैन । विदेशी नागरिकले संस्कृति धर्मको पूर्व दिशा उत्तरार्द्धकाल पटलवाधि गोपाल वंशावलीमा नेवार मल्लहरुले सिजापतिको हमलाबाट दुःख परी खसीया जिता भन्ने कोध शब्द व्यवहारमा रहेका वंशावली टिपी खसराज्यका राजा सेनालाई खसीया भन्ने लेखेको देखिन्छ ।

एटकनसन, राहुल संस्कृत्याएनले त्यहि पाटा गोपाल वंशवलीमा लेखेको पाई, पछिपछिको समय व्यक्तिले अडकल बाजी गरेका लेखलाई रुड, मानिनु। अजमरी लेख नहुनु लुटकू, दुल्लू, तिब्बत, गुँगे, खारिका, हिमनदीको वडरको वाजुरा, दानीगौडा, डोटी पैया चौर, वैतडी सानो ठूला पिपलकोट, हुम्ला, भोट, रेलिङ्ग गुम्बा, गोरखा तचवाई गुम्बा, भोट छर्कि गुम्बा, अछाम विनायक पंचदेवल, ऐ कुच्ची विहार मुग्रा, देवार गौडा, दुल्लू पादुका, दैलेख जिल्ला प्रशासन कार्यालयमा रहेका ताम्रापत्र, आदित्यको मूर्ति आदि हजारौं स्थलका सिलालेखमा खस राजाका लेखेका भन्ने नभेटिएला ! कोधको समयमा मानिसले गाली गर्दा के के भनिन्छ। त्यो गाली सत्य हुन सक्छ ! खसजातिको इतिहास विश्व प्राङ्गणमा छन्। खसजाति, खस जमिन, खस मानिस हो भन्नु असम्भव होलाकी ! डोटीको राजा निरयजङ पाल आफ्नो आमा मृत्यु भै मसान घाट लगे पछि मृतक मरेको मडा भैसकदा मडोको कोख (पेट) बाट निरयजङपाल जन्मिएको मल्लकालिन/मध्यकालिन इतिहासमा लेखेको पाइन्छ । माउजाति प्राणीको प्राण गएपछी त्यस प्राणीका नौवटा इन्द्रियाहरु बन्ध हुन्छन्। त्यसैले मृत मडोबाट कसरी बच्चा जन्मन सक्छ ? यो असम्भव हो ? मानिस भई नहुने कुरा लेखनु के को स्वाद ? सबै जाति नागवंश हुन त्यो कस्तो ? वावु, छोरा , नाति, पनाति जनातीको नाम वडा वर्ग थाहाछैन घनातिको मात्र वंश नाम थर गोत्र थाह पाउने व्यक्ति कस्तो होला ? इतिहासमा यथार्थ योग्य र ज्ञान बद्धर्क कुरा नराखी इतिहासकार बन्न खोजी कागज सर्टिफिकेट मात्र लिन खोज्नु मुर्खता सिवाहेक के हुन सक्छ ? खसराज्यको इतिहासमा अर्थ विदहरुले ४ जात मात्र ब्राह्मण, प्रधान, खस र मगर हुन्छन् भनेको छन्। जस्को **उदाहारण :-** शिवजीको प्रथना

१. ब्रहमा क्षत्री, एवैसे, सुद्र सवको सोर्धम कर्मै पनि ॥
विद्याहो रहने त्यसैवखतमा देखे सुनेको भनी ॥
२. लोगमा हितहुने कीर्ति पनि रहने यहि हो ठुलो ज्ञान धर ॥
विद्याहो ठुलो सम्पत्ति पनि ज्ञानहुन्छ अनन्त वर ॥
३. यस्तो यो कविता कहेर मनुजी स्वर्गै पुरीमा गया ॥
ज्ञान पूर्ण ज्ञानी जगतमा विद्याले संसार भया ॥

यो कविता मनुजीको हो , यसले विद्यानै ज्ञानहो ज्ञाननै विद्या हो भन्न खोजिन्छ। माथि १ नं.मा

# नागवंशको पहिचान

नागवंशावली भाग एकमा नागवंशका पुर्खा को थिए ? कहा थिए ? खसपति, सिजापति सेन, देव, चाप, चापिल्ल, चल्ल, मल्ल, पाल, बडुवाल र वानिया नागवंशका पदहरु कसरी थर बन्न गए/भए/ । किन ? कसरी, रहे, भए र नागका संततीहरु कसरी नागबाट उत्पति भए ? कहाँ कहाँ छरिएर बसेका छन्, धर्म, गोत्र, प्रहर शाखा, कुलदेवता ईष्ट, मित्र, पुर्खेउली संस्कार संस्कृति प्रा.पूर्व राजनैतिक अवस्था र नामावली, ठेगाना नागवंशी जनसंख्या समेत एकत्रित गरी नागवंशी वंधु एवं परिवारमा जानकारी गराउन यो नागवंशको वंशावली तथा ईतिहाँसको रुपको आधारमा प्रस्तुत गरिएका छ । यो वंशको ईतिहाँसले नेपाल, भारत ,चीन, तिव्वत का भूमिमा भएका राजनैतिक, सामाजिक, धर्म, कर्म, रितिरिवाजको पहिचान संवादन सम्वन्धमा, प्रस्तुत यो नागवंशको वंशावलीमा समेटी वर्णन गरिएको छ ।

वंश नाग हो, गोत्र कौसिल्य/कौसिल्य हो, पंचप्रहर हो, मध्यनि शाखाहो नेपालको ईतिहाँसमा एवं तिव्वत, चीन, भारत कर्णाली प्रदेशमा नागवंशको ठूलो ईतिहाँस देखापरेको छ । नागवंशको वंशावली दर्ता गोपाल राज वंशावलीमा, पश्चिम नेपालवंशावलीमा, तिव्वती वंशावलीमा, चीनको वंशावलीमा र भारतको वंशावलीमा नागवंशका राजाहरु दर्ता भएका छ । पृथ्वीमल्लको दुल्लु कीर्तिखम्भ इतिहाँसिक, क्राचल्लको उत्तरकासी वालेश्वर स्तम्भ र प्रयागगढीका लेखकरु, अशोक चल्लका गोपेश्वर शिवकुटी, गयाजी वैध सिला, बाराहाट त्रिशुल, स्तम्भ, रामेश्वर ठूलो स्तम्भ, केदारनाथ,बद्रीनाथका स्तम्भ, तिव्वत छर्कि गुफाको स्तम्भ, मानसरोवर हुम्ला रेलिङ्ग गुम्बा गुँगे ...........को स्तम्भ, लुम्बिनी अशोक स्तम्भ आदि अजमरी किर्तीहरु, किर्तिमान लेखहरु, रिपुमल्लका तिब्बत छर्की गुफाको लेख, लुम्बीनि अशोक स्तम्भको जिर्णद्धारको लेख, सिजा लामाथाडाको चौकि खोला ऐं सेरा गडामा वाधा पहडामा र ऐं वाधापडाको लेख, वाजुरा दानी गोडाको चट्टानको लेख, महाँचीन मोरलको लेख । नागराजका :- सिजाकनका सुन्दरी हिमनदीका वडारको लेख, मानसरोवर कर्णाली नदी मुहानको सिला, मुगु जाड गुफाको ताम्रपत्रका लेख ।

अक्षयका अछाम विनायक पंचदेवल घोडासैन, हाँकु, सेरा बान्ने तोली, जयगढ, कालापानी, कालागाउँ, तोली विरमम्भ, तोसी धमाली, वगलदेउ तोसी, देवल सिला, वैतडी पिपलकोट दार्चुला, सिमलकोट, देथला आदि आदि लेख । मानसरोवर खारि कर्णाली नदीको मुहानको सिलामा नागराज धानि हुन भन्ये लेख छ। यी आदी कुराहरुले विश्व प्रभावित हुँदा नागराज्य विश्व इतिहाँस सूचीमा रहेको ले सिजाराज्य पहिलो, ठूलो र कानूनी राज्य भनिएको मानियको छ ।

यति आदि काम, कारणले देश विदेशका वंशावलीमा (सूचीमा) चढेको हो ।

नागवंशका परिवार ४५ जिल्लमा ३४२१ घर नेपालमा छन् । भारतको पिथौरागढ, बद्रीनाथ, रानीखेत, अलमुरा, हरिद्वार र कास्मिरमा अनुमानित ६००० भन्दा बढी घर संख्या रहेको हुन सक्छ। नेपालमा रहने ४५ जिल्लाका नागवंशीहरुको वंशावली तथा ठेगाना यस पुस्तिकामा उल्लेख गर्ने कोसिस गरेको छु।

**नागवंशको नालीवेली**

१. नागवंशको जन्म कहा कसरी भएको थियो ।
२. नाग वंशका पुर्खाहरुका नाम ।
३. नागवंशका पदहरु केके थिए/हुन् ।
४. नागले मल्ल पद लेखनाको कारणहरु ।
५. नागवंशीय सम्राटका कीर्तिहरु ।
६. काचल्लका कीर्ति र स्तम्भहरु ।
७. अशोक चल्ल/पाल का कीर्ति कामहरु ।
८. नागले वंशहरु वदल्नाका कारणहरु ।
९. नागवंशीहरुका वंश, गोत्र, प्रहर, शाखा भिन्न हुनाका/भन्नाका काम कारणहरु ।
१०. नागवंशी परिवारहरु कहाँ कहाँ बस्छन् पहिचानहरु ।

११. नागवंशी सम्राटका सिला स्तम्भ एवं देवलहरु ताम्रकनक पत्र प्रमाणहरु ।
१२. नागराजा जावेश्वर जुम्लेश्वर, सिजापति, मल्ल, वडुवाल/वरुवाल हुनाका कारणहरु ।
१३. नाग नेपाल प्रवेशका समय-स्थान हरु ।
१४. खारिराज्य स्थापना गर्ने सिजा राज्य, दुल्लू राज्य र तिलेपाटा राज्य स्थापना भएका कारणहरु ।
१५. सिजाराज्य स्थापना गर्ने व्यक्ति, राजाको नाम ।
१६. धेरै थरिका सिजापति भन्नाको तात्पर्य के होला ।
१७. धेरैजसो नाग वंशीय शासकका द्विज (द्धिध) राज्य हुनाकारणहरु ।
१८. नाग राज्य न भई खसराज्य, खस राजा खसदेश हुनाको कारण ।
१९. शीतकाली, ग्रीष्मकालीन राज्य किन कहाँ कहाँ रहेका थिए ।

१. नागवंशको जन्म भारतको पद्मावति विन्द्रावन शिशु नाग द्वारा उत्पति भएको अवगत भएको छ ।
२. नागवंशका पुर्खा नेपालमा ३७० तिर प्रवेश भएको देखिन्छ । नेपालको इतिहासमा पनि चोभारको वडारमा कर्कट नाग प्रवेश भएको भनिएको छ ।
३. नागवंशका पदहरु शिव/वौद्ध धर्मावलम्बी अनुसार सेन, देव, चाप, चापिल्ल, चल्ल, सिजापति, सिजाधिपति, मल्ल अन्तमा वरुवल भएको थियो । शिव धर्मको आधारले नागले शिव वंश शिवभार वंश हु भनेका थिए । चाप, चल्ल, चीन (भोट) ठाउँको नामले चाप, चल्ल पदवि रहेको, रहेछ । सिजापति नागले सिजाराज्य स्थापना गरेकोले सिजापति पदवि रहेको सर्वविदितै छ । सिजाधिपति पद चीन, भारत वाराहाट गोपेश्वर बद्री केदारको ईलाकामा राखेको हुँदा, सिजाधिपति पद नाग काचल्लले हासिल गरेको संधिसंग्रह साथै सिजाको रुपरेखा इतिहासवाट पनि जानकारी भएको थियो । मल्ल पद जितारि चल्ल, अशोक चल्लको पुत्रथिए । यिनले ९औं सताप्दिमा काठमाण्डौ अनन्त मल्ल राजाको कालमा उपत्यकामा हमला गरि तेस्रो हमलामा पछिल्लो वर्ष फाल्गुणको महिना श्री पंचमिका दिन स्वयम्भू डाँडाँमा यूद्ध स्थल जुटेकोले यूद्ध सफल गर्दा ८०० खस सेना र २००० दुई हजार भन्दा माथि लोथे नेवारका सेना मरे बाचेकाहरु केहिले रासन लिई वन पसे । अनन्त मल्ल राजाले खसिया राजा जयतारि आजदेखि संधि गरौ काठमाण्डौ उपत्यकाको रैतिबाट उठने तिरो कर ८% को सिजामा ४% कर दिने र बाँकी ४% उपत्यकामा राख्ने सल्लाह गरी संधिपत्र भै ४% तिरो लिइ जयतारि सिजा गई मैले मल्ल राजालाई जितेकोले जितारि र मल्ल पद धारणा गर्ने घोषणा गरेको छु । भनेकाले जितारि मल्ल पद रहेको थियो । यो वारे उक्त अनन्त मल्लको ताम्रापत्रमा उल्लेख छ । डिट, किनारमा ताम्रापत्रको टुटेको हुँदा थोरै शब्द नवुभिएको देखिन्छ । नाग वंशका सम्राट जितावाट जितारि मल्ल पद लेखियो, जितारि, आनन्द, रिपु, संग्राम, अक्षय, आदित्य, कल्याण, प्रताप, पूण्य, पृथ्वी, अभय, तपये, दाम, भावै र धामराजका मध्येन्न समयसम्म १५ पिडि मल्ल नक्लि मल्ल भै राज्य संचालन गरे । धामराजले हासुराज सिंह पुवार र श्री वम सूर्यवंशलाई विषालु पिख्य भोटे राजाले वरवरी आतंग गरेकोले मित लगाई मित्रभोज दिने वरिपरी देवाल (पर्खाल) लगाई भित्र भोज दिइ अन्तमा दहिमा विष फिटी नैवेद भनि विष हाली भोटे राज्य उडाएकोले श्री वमले हाम्रो सत्रु उडाउने वडोतन्त्र सिकाएकोले धामराज मल्ललाई बरुवाल वडो पदवि भनेको र धामराजले मेरो वडोतन्त्र रायकोले श्री वम तिम्रो रावल पदवि भयो, हाँसुराज सिंह द्वारा विष हालिएकोले विष्ट पदवि भनिएको थियो, भन्ने अछामको इतिहासको पेज नं. २९१ मा उल्लेख छ ।
४. नागका पुत्र चापले मानिसमा नाता/साइनु चलाएका थिए । हामीले परिवार, सन्तान इष्ट मित्र सित भनिने/वोलिने नाता/साइनु चाप नागले रचेका थिए । मानिस पशु तुल्य थिए । चापले साइनु नाता उत्पादन गरि मानविय विकास भयो ।

५. नागराज क्राचल्लले हप्ता, गते, वार महिना, वर्ष, दशक, सताप्दि, क्वीटल, चट्टाङ, कोष, कि.मी. पटाङ नम्बर, क्वीटल जस्तो विषय रचेका/उत्पादन गरेकाले काचलले प्रख्यात प्रचलित भएका थिए ॥

६. काचल्लले सिजाराज्यको सिमा वृद्धि (सिमान्तर) कायम गर्दा, माथिका तिथिमिति एकुरेट गरेकाले, सिजाधिपति पद धारण गरेको वालेश्वरको लेखमा उल्लेख छ ।

७. अशोक चल्ल/पाललाई हिमाल सम्राट, आकाशे सम्राट, छत्रपतिराजा, ईन्द्र सरहका सम्राट, सूर्य अस्ताउने उदाउने राजा भनी ईन्द्रले पदवी दिएका छन् । भारतको बाढ्हाट शिव त्रिशुल, गोपेश्वर विहारको स्तम्भ र ताम्रापत्र उल्लेख छ ।

८. नागवंशीय राजाले जो ठाउँमा शासन गरे त्यसै ठाउँको वंश लेख्नु, यो नयाँ राजकुल हो, भनि देशवासी राजकाजको नीति नियम बुझ्न पर्खिएलान (पर्खिन्छन) भनि यो वाजाको धुन गर्नलाई ठाउँको नामलाई वंशलेखेको हुनु पर्छ ।

९. नाग वंशका गोत्र, वंश, प्रहर, शाखा अलग देखिनाको कारण, माथिको अभ्यासले होला ।

१०. नागवंश परिवार नेपाल, भारत, भोट तिब्बत, इजाराइल, आदि देशमा छरियर वसेका छन् । नेपालकै कर्णाली, गण्डकी, कोसीको भुभागमा रहेका पाइन्छन् । नेपालका सिन्धुली, काभ्रे, धनुषा, महोत्तरी, संखुवासभा सर्लाही लगायतका जिल्लाहरुमा एक/दुई घर धुरी मात्र छन् ।

११. नागवंशी सम्राटका सिला स्तम्भ, चीन तिब्बत, भारत, कर्णाली प्रदेशमा छयाप छयाप्ती र गाण्डकी प्रदेशको केहि ठाउँमा नागवंशका सिला कीर्ति रहेको देखन्छन् ।

१२. नागवंशीय सम्राट नागले- जावेश्वर, सिजापति, जम्लेश्वर, जुम्ली महाराज यी ठुला पदवि हासिल गरेका थिए । यिनको आन्तरिक मनसाय नृप नलेख्ने वौद्ध रुप हुने मनसाय रहस्य होला, भन्ने अनुमान ठहर गरिन्छ । सितकालिन र ग्रिस्मकालिन राजधानी, हुनका कारण खारि/मानसरोवर राज्यलाई सिजा स्थापना राज्यकाल भइ सक्दा ग्रिस्म कालिन खारि सितकालिन सिंजा राजधानी थियो । क्रमशः मौसमी कारण सेन्टर पनि मिलाई ग्रिस्म राजधानी सिजा लामाथाडा, सितकालिन राजधानी दुर्लङयनगर दुल्लू रहेको थियो । यो मौसमि राज्य दिगो रहेको देखिन्छ ।

तत्पश्चात हिउदे मुकाम सुर्खेत मंगल गढी, काँग्रि विहार वौद्ध कुटी रहयो, अझ भु भागको चाप मिलानका हेतु हिउदको (सितकालीन) केहि समय बर्दिया दानुवातालमा रहेको, दरवारको भग्नाशेव पाइन्छन्। यसै क्रमले पटके राजधानी, यि ठाउँमा यसरि रहेका देखिन्छ। तर सिजा, दुल्लू दिगो राजधानी थियो । वाजुरा बझाङ पनि थर्पु जोडदार राज्य थियो । जहाँ शासन गर्दा पनि सम्वोधन सिजालामा थाडा भन्य लेखिन्थ्यो। इतिहासहरुमा उल्लेखित ताम्रपत्र कनक पत्रमा देखिन्छ ।

दुर्लङयनगरको कोटी स्तम्भमा, नागराजान्वयन लेखिएको छ । मानवशरोवर खण्ड कर्णाली नदीको मुहानमा नागराज धानि भनिएको सिलालेख छ । नागराज्यमा प्रत्येक वैशेनर भएको स्थानीय, प्रशिद्धिका नागराज अपाड राज खसराज्य खसानराज, हिमालीराज, भोटान्तर राज, पर्वतराज, ईत्यादि अभिधान छन्। नागराजका सन्तानहरुको राज्य शक्ति क्रमोट शासकद्वारा भारत, चीन तिब्बत र नेपाल सिजा खसराज्य सिजापति महाराज अशोक ईन्द्र समान छत्रपति गोपेश्वर सिलामा अशोक चल्लको सिला स्तम्भमा छ। काचल्लको सिलालेख उत्तरकासी वालेश्वरमा अजमारी लेख छ। चीनको मुद्रा दुल्लू दरवार वाट छिनिन्थियो भन्ने पनि देखिन्छ । तर नागराज जावेश्वरको कल्पना साकारको शुत्र हो । नेपाली भाषापति साइनु सनेव+भाषा भेश आदि सिजापति सम्राटको अजमरी काम, चन्द्र सूर्य जस्तै छदै छन् । नागका छोरा नाति सन्तानले नागराजको सपना साकार गरेकै थिए । म शिवभक्त प्रायणम् भनेका थिए । म शिव हुँ पनि भनेका थिए । तेति ठूला नागराजले नृप लेखेनन् । जावराज (जावेश्वर) लेखे । यसमा ठूलो महानता देखिन्छ ।

कर्णाली लोकसंस्कृति इतिहास ७७ पेजमा

प्रताप मल्ल अशोक चल्ल/पालका चौथो पिडिका आदित्य मल्लका नाति जितारि मल्लका जनाति थिए , नागराजले पनि अशोक चल्लले र आदित्य मल्लले पाललेखेका छन्। नागराजका छोरानातिले चल्ल नागपालका छोरानतिले पाल लेखेतापनि नागराज र नागपाल सहदर दाजुभाई थिए। हुन भन्ने धेरैको लेख छदैछ। सत्य मोहन जोसी ज्यू समक्ष यो के होला ? भन्दा पहिल्यका इतिहास लेखने हामी कुईराका कागभयौं भन्ने बचन मिल्यो, सत्यमोहन ज्यूको सत्य र मिठो सोभाव मिथ्थो यहि ०७३/४/१४ गते यसमा संधिपत्र संग्रहमा नरहरी नाथले दुल्लू कीर्ति खम्भको ११ श्लोकले दुल्लू सम्राट पृथ्वी मल्ल मलय बर्माको धनाति हुन भनेको सत्यमहोन र मोहन प्रसाद खनालले दुल्लु कीर्ति खम्भको ११ नें. ले दुल्लु सम्राट पृथ्वी मल्ल नागहुन नागवंशी सम्राट हुन यो हाम्रो ठकुवा हो, वृ.जु.रा.ऐ. विवेचना पे.नं. २४८ मा छ सो कुरा छन्। वावु वाज्ये प्रवाज्ये, ब्रमवाज्ये, वाज्येका बाज्ये कोहि हुन्नर यो पनि सोधियो। बालकृष्ण पोखेलले ५०० वर्ष खस राज्यको इतिहासमा जितारि मल्ल मेरो इतिहास लेखको उठानमा आएन ? लेखेको जितारि मल्लका लेख दै साताला खम्भडाडाका ५ सिला बाजुरा दानी गौडाका देवल चट्टानका लेख तिब्बत स्तम्भ् चीन मोरल स्तम्भ लुम्बीनी अशोक स्तम्भमा लेख काठमाण्डौ अनन्त मल्ल राजाको ताम्रापत्रका लेख हुम्ला, मुगु दार्चुला, वैताडि आदि अनन्त सिला लेख छन निर्जीव पत्थर हिडेर मोरङ जाने होइन्न होला ? राजाराम सुवेदीले नागवंश खस वंश हो भनेको डोटि निरयजन पाल आफ्नी आमा मृत्यु भइ मडो भइसके पछि मडाको पेटवाट जन्मेका मध्ये, मल्ल कालीन इतिहासमा छ। काठमाण्डौं हुनुमान ढोक, राष्कोटी ठकुरीले बनाएको लेखेको यो नेपालको इतिहासमा अरुहरुले लेखेका इतिहासमा कही भेटिएन। यी सबै कुरा इतिहास कार सत्यमोहन जो सी ज्यूलाई सोधिएको थियो त्यही माथिकै उत्तर दिनु भयो।

**कर्णाली लोक सं.इ. ६७ पेजमा**

सिजाराज्य कहिले नागले स्थापना गरे ? त्यसको ठीक किटानी भएन उक्त क.लो.स. को पे.न.४मा लेख ४ पे. १२ स.९ स. १३ औं स. यस प्रकारले लेखेको नागको आठौं पुस्ता (पिडिका) जितारि मल्लका ताम्रकनक पत्र, एकमा वि.सं. ११४५ लेखेको आठपुस्ता पहिलेका नागराज थिए। ११ औं १२ औं १३ औं पिडि (सताव्दि) भन्नु लेखनु औचित्य होला र सव्यता रहित सिजाराज्यको प्रपोजल बमोजिम नागले सिजा राज्यको जग बसाले स्थापना गरे भनिएको पनिछ। वास्तवमा सिजाराज्य ५औं शताब्दि तिर स्थापना भएको भन्ने इतिहासले देखाएको छ। ११ शताब्दिमा जितारी मल्लको काठमाण्डौ उपत्यका, हमला गोपाल वंगावलीमा छ। तेस्रो युद्धमा फागुनको महिना श्री पञ्चमिका दिन स्वयम् भु.को डाडामा यूद्ध स्थल ज्योतिषि हेराई मिति र स्थान दिएकाछन। जितारिले, पशुपति, विष्णु मती बागमती कोष भेटी चढाई देवी खुसी बनाई/स्थलमा गए श्री पञ्चमीको दिन नेवार राजा अनन्तमल्ल केही सेना साथमा लिई पशुपतिमा गएकाथिए बाँकी सेना माथि हमला हुँदा केही खसीया सेनामरे २००० भन्दामाथि लोथे (नेवार) सेनामरे केहि रासन लिई वनवसे भन्ने कुरा अनन्त मल्ल राजाको ताम्रापत्रमा लेखिएको छ। पछि संधि हुँदा उपत्यका जनतावाट ८% तिरो उठाउने ४% सिजाराज्य कर दिने भन्ने संधि भयो। सो रकम सिजा ल्याई जयतारी चल्लले जितारि मल्ल पद घोषणा गरे भन्ने इतिहासमा उल्लेखै छ। नागले ११,१२,१३औं शताव्दिमा सिजाराज्य स्थापना गरे भन्नु, र ११ औं शताब्दिमा जितारिले काठमाण्डौं उत्यकामा हमला गरी विजय गरे भनि अनन्त मल्लको ताम्रापत्रमा उल्लेख हुनुले माथिको मिति गलत देखिन्छ।

### नागराजको खारिप्रदेश सिला स्तम्भ

नागराज संगीत प्रेमी थिए भन्ने कुरापनि थाह हुन्छ। यिनी राजा सरलवाट महा यशस्वी राजा श्री जावाभए भन्ने उल्लेख पाइन्छ। यिनी पछि यिनका पुत्र चाप चापिल्ल, मल्ल पाल सिजाधिपति/खसपति वोलिय जयपाल द्वितिय श्री जाव नाग वंशी नै थिए। यिनका पुत्र पूण्य मल्ल तिब्बत पुष्कन छर्की कुटिमा व्राह्मण लिपि अध्ययन गर्दथे नागवंश सिजापति मल्ल पद वोलाएका थिए। तर यिनको नाम तिब्बत स्तम्भ, नेपाल, दुल्लु स्तम्भ र काठमाण्डौं, गोपाल वंशावलिमा रहित भारत वंशावली चीन आदि ठाउँदेशमा वंशावली/नाम लेखिएकोले विश्वसूचिमा/नागवंशीराजाहरुका नाम लेखिएका छन्। वंशावलिमा अंकित छ। गेला वंशी पूण्य मल्ल देखिएकाछन् नागराज चाप, क्राचल्ल, अशोक चल्लपालको नाम विश्व सूचीमा रहेको पाइन्छ।

### तिव्वत स्तम्भमा लेख

यो लेख सिजापति नागराजको तिब्बत स्तम्भले नागराजका वंशज राजाहरुले कीर्तिमय कीर्ति विश्व प्रसिद्ध राजा राज्य गरेका प्रमाणहरु चीन, नेपाल, तिब्बत भारतका धेरै ठाउमा अजमरी किर्ति गहनाको इतिहास सर्वविधितै देखिन्छ। दुल्लु किर्ति खम्भका लेख माथि उल्लेख गरिएकाछन। यसैले नागवंशको राज्य प्रशासन कृतिहरुको धनी नाग वंश देखिन्छ। सिजाखोला उपत्यकाको इतिहासमा तिब्वती वंशावलीको (वंशावलीहरु) ले धेरै आधार दियि प्रकास पारेका छन्। तर कर्णाली प्रदेश अवेसणकार्यमा लागेका श्री जि. टुची ईटालियान तथा इतिहासिक अंवेशण डा. मोहना मोलीद्वारा प्रेसित वि.सं. २०१३ मा प्रकासिद इतिहास प्रकाश अंक २ भाग १ हेर्न पाएपछि उनले सन्तोष व्यक्तगरे। यसरी लेखे सिजामा पुगि सिजालामा थाडा विशाल भग्नावेशहरु, त्यहारहेछन् र त्यहाँ मुद्राहरु प्राप्त हुँदारहेछन्। त्यस्तै पुराना भाडाकुडा भग्नावेश विभिन्न किसिमका पुरातातिक तत्वहरु नेपालमा दुई वैज्ञानिक अभियान प्रारम्भिक प्रतिवेदन पृष्ट १५२ तिब्वति वंशावलीहरुमा सेजा अथवा सिजालाई व्यावस्थ पुराङ भन्ने उल्लेख गरेको पाइन्छ। सिजाका छिमेकी राष्ट्रहरु समेत सिजापति नागराजका भारी भारी स्तम्भ ताम्रापत्र मुग्रा देवलहरु कुटीहरु र त्यहि/केहि उत्कृष्ट लेखहरु नागवंशी देव, चाप, चल्ल सिजापति, मल्ल र पालका नामका स्वदेश विदेशमा पाइएका छन्। सिजाका हिमालका उत्तर दक्षिण पारका विशाल भूमिलाई मल्ल अधिराज्य बनाउने/भनाउने सिजापति सम्राट जिताले नेवार मल्ल राज्य काठमाण्डौवाट सिजाराज्यलाई ४% करको उपत्यका वाट तिरो लिएकोले जिताले जितारि मल्ल पदलेखेका हुन। काठमाण्डौका नेवार मल्ल राजाले मानसरोवर वाट तल सिजा आइवस्दा नाग (सिजापतिलाई) खसिया राजाले उपत्यका हमलागरे, खसिया सेना मरे/मारे भन्ने अलङकारी शब्द प्रयोग गर्दा, खसजाति खसराज्य भनिदै गएकाले त्यहि लेखिन गयो पछि सिजाखस राज्य खस, जाति शब्द हुदैन विश्वको खासराज्य खासराजा पहिलो ठुलो र कानूनी नेपाली राजकाजको भाषा र नाता/साइनु उपज भएको ठाउँ र नाग चाप काचल्ल सम्राटको महान उपज हो। खास राजा खास राज्य सिजा भन्ने नेपाल भारत ईजराईल वेलायत र रुष देशका इतिहास विधहरुको लेख देखिन्छ। रुषको मास्कोको इतिहास कार विद्यावनहरुको निर्णय लेखेको पाइन्छ। ठाउँ र व्यक्ति खस हुदैन भन्ने शिद्ध गरिएको नेपालका सूर्यमाणि ज्ञावली, भारतका प्रां. गोपाल चत पाण्डे इजराईल........ उल्लेख गरिएको पाइन्छ।



# नागवंशको परिचय

नाग र सिजाको सम्बन्ध रुष मास्कोका इतिहास विधहरुको राये/सल्लाह एवं कमिटी निचोडको निशर्कष कमिटि सदस्य नेपालबाट सूर्यविक्रम ज्ञावली भारतबाट गोपेन्द्र चातक पाण्डेय इजराइवाट.............. रुषका.................... वेलायतवाट............ यो इतिहासविधहरुको सार्थक निचोडलले सिजा र सिजापति वारेमा भएको निर्णये सिजा उत्तरचीन भोट दक्षिण भारत उत्तर प्रदेशको वाराहाट गयाजी रामेश्वर, वालेश्वर वर्दि केदार नाथ कुर्मान चल खासराज्य सिजा त्यहाका सम्राट खसजाति होइन खासजाति हो, । जाति खस र भूमिखस हुदैन खास राज्य नागदेशलाई खसदेश भन्नु सोभासिक होइन । सिजा स्थल भूगोल स्वर्ग हो धेरै सेरोफेरो मिलि सिजा राज्य ठूलो पहिलो, कानूनी र भाषा राजकाजमा उपयोगी, नाग चापले साइनु सनेषा उत्पादन, बार, हप्ता, गते, महिना, वर्ष दशक र शताव्दिको उत्पति, क्वीटंल पटाङ चट्टा, हिकटर, फर्लाङ कोषको उत्पादान पनि सम्राट नागले भाषा, चापले नाता साइनु इत्पादन तिथी मिति काचल्ल नागवंशको उपजहो । स्वर्ग भूमि, छत्रपति आकासे, हिमाल र इन्द्र समान सम्राट अशोक छत्रपति सम्राट थिए । मानिसको हातवाट वा माथिवाट तलखस्नु रुखबाट तलखस्नु मृत्यूहुनु यि खस शब्द हुन,हिमाल, छत्रपति बताँसे इन्द्र शरहको सम्राट खस हुदैन । सिजा उपत्यका स्वर्ग भूमि सुन्दर भूमि खसराज्य खसदेश हुदैन खासदेश खासराज्य खास राजा सम्राट छत्रपति हुन खस मानिस जात भूमि हुदैन । सुन्दरसिजा स्वर्गे सिजा खासराज्य सिजा नागराज एवं नागवंशीय सम्राट श्रेष्ट सम्राट छत्रपति सम्राट आकासे सम्राट हिमाल सम्राट भनिएको देखिएको सिजा सिजापति हिमराज हिमाल आकासे इन्द्र समान छत्रपति सम्राट खास देश हो खासिया राजाले काठमाण्डौ उपत्यका महलागप्या भन्ने नेवार भाषामा भनिएको रिसको भाषा आमाबाबु छोरी वहिनी गाली गर्ने भाषा रिसको प्रयोगी शब्द साँचोमा इतिहासमा राखिन्न भन्ने संन्देश अलंकारि रुपमा दर्शायको पाइन्छ । खसीया उपत्यका हमला गर्न आए नेवार राजाले भनेको कुरा भनिएको हो, यो देश सिजापति खस देश खस जाति होइन नाग देश खास राज्य खास वासी हुन इतिहासविद्को निष्कर्ष छ ।

**इतिहास के हो ? कस्तो हुनु पर्दछ ।**

१. इतिहास लेखक मोरङ बालकृष्ण पोखेलले जितारी मल्ल मेरो इ.ले.को (उठानमा) अगाडिआएन भनेको ? लुम्वीनी अशोक स्तम्भमा दैलेख साताला पंचखम्वा दुल्लू कीर्ति खम्म, वाजुरा दानी गौडा, तिव्वत, चीनका स्तम्भमा जितारिको नाम लेखेको छ । यी अजमरी निर्जीव पत्थर अटलछन् मोरंजान सकदैनन् अशर्मथ छन् ।

२. पूर्ण्य प्राकास नेपाल रुपरेखाको पे.नं. ३५, पूण्य मल्ल निशन्तानी थिए । आदित्य मल्लले सकुमाला छोरी पदराज्य, सिजा राज्य, गोत्रवंश दाइजो दिए पछि निशान्तनी भई तिर्थ स्थलगए । सिजाराज्य नाग पुत्र लाई फिर्ता गरे भनेको पूण्य मल्ल जयपाल द्धितिय श्री जावका पुत्र हुन् । सम्राट प्रताप मल्ल सिजापतिले आफ्नो वंश भाई चलाख व्यक्तित्व राज्य चलाउन क्षमतावान भएको हुँदा पूण्य मल्ल भोट पुष्कान गुम्बामा बौद्ध कुटीमा अध्ययन गर्न बसेको त्यहावाट बोलाई सिजाराज सिंगासेनमा राखे, पूण्य मल्लले उत्तर वायुको द्धौ निर्मुल गरि सिजा राज्यमा सबल विकास गरेका थिए । भन्ने इतिहास पाइएका छन् ।

३. राजाराम सुवेदी नागवंशी खसराजा खसवंशी हुन लेख डोटीको राजा निरयजङ पाल आफ्नी आमा मृत्यु भइ भइ सकेकी मडाका पेटवाट जन्मेका हुन भन्ने मल्ल (मध्यकालि) इतिहास भनि त्यसमा लेखेको नहुने कुरा भुटा कुरा, गलत कुरा हो खास कुरा भनेको मडोवाट कुनै जीव जन्मेको सत्य, द्वापरा, कली संगम, कुनै युगमा जन्मदैन (मृत्युभएको, माउ जाति वाट बच्चा जन्मदैनन् हुदैन ।

४. नरहरी नाथले नागराज नागपाल दुई सहोदर भाई तेसैको छोरा नाति जयपाल द्धितिय श्री जावकोपुत्र पूर्ण मल्ल पुत्र दुल्लू सम्राट पृथ्वी मल्ल हुन, ति सम्राट पृथ्वी मल्ललाई मलय बर्मा राष्कोटीको घनाति भन्ने वृहत जु.रा.ऐ विवेचना इतिहास पे.नं. २४८ मा वा ३६८ मा सत्य महोन जोसी संस्कृत विद र मोहन प्रसाद खनाल साँचो लेखने विद यि दुवैजनाले दुल्लू कीर्ति खम्वको ११ नम्बर मा दुल्लू सम्राट पृथ्वीमल्ल नागवंशीय सम्राट हुन । यो हाम्रो ठोकुवा हो भनेकाछन् । नरहरिनाथ इतिहासिक चोसो हो, त्यसैवाट सिलाखम्वाका संस्कृत लेख बाटै ज्ञान गरेको व्यक्ति दुल्लू कीर्ति खम्भ नाग वंशीय सिजापति इतिहास त्यहि हो भनीएको छ । ३५ हर्फ एक तर्फ ३६ हर्फ एकतर्फ छन् । पृथ्वीमल्ल मलयवर्माको धनाति छैन होइन त्यो मानिसले जानीजानि त्यो किन लेखेत university भएपनि चाहे त्यो संस्कृतले अनुवाद गर्ने व्यक्तित्व व्यक्ति थिए । किन लेखे होलान् ?

**बाल कृष्णः** जितारि मल्ल मेरोलेखको उठानमा आएन भनेका ५०० वर्ष खास राज्यको इतिहासमा जितारि मल्लका लेख लुम्बवी अशोक स्तम्भमा गोपाल वंशावलीमा अनन्त मल्लको ताम्रापत्रमा दुल्लू कीर्ति खम्भमा दैलेख साताला खम्वडाडा पाच सिलामा वाजुरा दानी गौडा चट्टान डाँडामा दार्चुला देथल सिलामा तिब्बत हुम्ला सिला स्तम्भमा जितारिका लेख छन यी अजमरि निर्जिव हिडदैन । होलान ? के किन लेखेत ? पूण्य प्रकास नेपालले नागपालको सन्तान/नागको सन्तान जयपाल द्धितिय जावको पूण्य मल्ललाई नाग राजको सन्तान प्रताप मल्ल निशन्तान हुँदा आफ्नो वंशको भाईलाई तिब्बत छर्कि गुफामा अध्ययनरत वाट वोलाई सिजाराज सिंगासनमा राखेका हुन/थिए/भनेकोमा प्रताप नभनि आदित्यको नाम अज आदित्य निशन्तान छोरा (राजकुमार) कल्याण कल्याणको पुत्र प्रताप नै निशन्तानी थिए । प्रतापले भाई पूण्य मल्ल छर्किबाट सिजा ल्याएको यी नागपाल थिए छोरी जुवाइ होइन ।

पूर्ण प्रकास-ले तिलेपाटा सम्राट धामराजले दुल्लूवाट तिलखि बम सहित बुसाल दमाई चौकिको चदाँरो, आग्र ठिमुरेको फडारो, दानीमोरे भूल भेलतडे माफि समेत ल्याइ तिलखिवम लाई राज्य गराएको दै. ८।२० का जनजातिका तिव्रोमा छँदैछ । त्रिलोके बम विलास पुरे हुन लडाइगरे फुटाकुराको कुटिरो बनाइ लेखेको काठमाण्डु फैक उसैका घरमा गई किन, यी गलत लेखिस भन्दा दै. सिगाउडी जयाजैसीले भनें र लेखे विस्वास माने इतिहास जस्तो भनाईमा लेखनु मेरो गलात हो सुधारि दिन्छु क्षमा भनेको थियो । यसबारे धामराज वडुवाल, सुदर सन पाध्यासम्भु अर्चाज ३ को सल्लहले भएको कुरा माथि लेखेको छ ।

यि गलत कुराको इतिहासबाट के शिक्षा पाइने होला ? दुल्लू कीर्ति खम्वमा नागराजन्वय नागराज धानी भन्ने दुल्लू खारि तिब्वतका सिला स्तम्भमा लेखेको छ । सिजा र सिजापति नागराजको याद आफ्नो संस्कृतिक जानकारीको लागि पनि खोजी गरिन्छ । संसारमा आफ्नो चीनारी नदिई गायब हुन्छ भने त्यसको सांस्कृति तथा परिचय विना संस्कृतिको अपुतालो भएको ठाहरिन्छ । जातिले त्यसको वंश सास्कार र सस्कृतिको खोजी हुन सकसक लाग्नु पर्ने वर्ष खास कुरा वा शब्द भाषाको अपभ्रष्ट भै खस शब्द भनिन गएको हो । खास कुरा वास्तवमा खास प्रमुखकुरा हो भाषाको अपभ्रंश भएको हो । खस शब्द नेवारको भाषाले बोलिएको हो ।

नागराज सिजापति/पाल

नाग राज नागपाल सहदर दाजु भाई थिए । त्यसैको यस वंशका भाई भरादर को नालिवेलीको खोजी खवरी साथै यसको परिचय जानकारी नाग र पालमा अवगत हुनुपर्छ । नागपाल आदिपाल अमर पाल जयपाल, विजयपाल। विरपाल, विक्रमपाल, धिरपाल, समपाल, सूर्यपाल, समुन्द्रपाल, सुखपाल, गोहपाल,

रुप रे. पे. ५० दार्चुला उकुकोट

पृथ्वी मल्लले दुल्लू कीर्ति स्तम्भमा वहुल राज्यको पनि पुष्टि गरेका छन् । दार्चुला उकुकोट दामुपालले स्थापना गरेका थिए । यी राजा दामु पालको दुल्लूमा १०३८ को अभिलेखले पनि यी नागराजका संतान हुन । नाग हुन् भन्ने विजया स्तम्भले पनि नागराज र नागपाल एकै वंश हुन अन्य प्रमाण मिलेको छ त्यो विजय स्तम्भमा एउटै संतान हुनाले पालराजाका १८ नाम लेखेका छन् । वंश सन्तान एकै नभए कि आफ्नो पुस्तावलिमा जोडने थिए । यसबाट पनि नाग र पाल एकै सन्तान थिए भन्ने ठुलो प्रमाण भएको छ

**अछाम सेराका कौशील्य गोत्रीय भण्डारी र सिजापति/वडुवालको सम्बन्ध**

डोटी फुलौवटका फुलौटी खड्का खातीखडका थर रहेको छ । त्यस समयमा सान्नीका राक्षो राजा सित त्यो खडकाको गढवडी भए छ । त्यो खडकालाई मार्ने भई ऐडो लगाई मार्ने कार्यको समयमा त्यो खडको दगुर्दै धामराज वडुवालको घरमा आउदा धामराजको धर्मपत्नीले, त्यसलाई ठूलो मोही पार्ने पारा हाली माथि नाङ्नाले छोपि दि छन । त्यो राजाको ऐडोले, खडकोहि आए कि भनि सोध्यछ यहा आए भनिछन घर तलासी गर्दा सबै कोठा ठाउँ हेरेछ । तर त्यो पाराभित्र हेरेन यसघरमा छैन भनि ऐडा गएछ उक्तखडकालाई रातारात अछाम सेरापठाइन् । अछामी राजाले बचाउन खडकालाई भण्डारी क्षत्री वोलाए बजगाई भण्डारी बोलाए, दुईभाइ रहेछन, एउटा अछाम नै थिए । दोस्रो पनि अछामै गएको दुईभाइ भण्डारी वोलाए पद भण्डारी भयो । जेठा विरु दैलेख गए कान्छा बीरमा अछाम सेरामा नै वसे । दैलेखको नीमायल छडाथान लम्सु गाउ फैलिए । कान्छा बीर्माका सेरा, कुच्ची मुली कताकता दोगडा पसे/वसे हाल २।३ सय घर दैलेख २।३ सय घर अछाम छन् ।

तर हाम्रा पुर्खालाई मै पाल भण्डारी भन्दछन्, हाम्रा पुर्खा (पूर्वज) को अर्ति उपदेश थियो नागवंशी वडुवाल हाम्रा कुलदेवता हुन् । नागवंशी वडुवालको छोरी र भान्जी विवाह गर्नु हुदैन । आमाले बचाइन आमाले वडुवालकी छोरी भान्जी लिनु हुदैन भन्थ्ये भन्ने हाम्रा पुर्खेउलीहरुको भनाइ हो । माता पिता नागवंशी वडुवाल हुन् भन्ने पुर्खौली दिएका थिए हामी मान्दछौ । हाम्रा कुलका सम्पूर्ण व्यक्तिहरुले वडुवालको छोरी लिनु हुन्न । लिएमा फलदायिक हुदैन भनेका थिए । यो एउटा सत्यता हो ।

गिरि भण्डारीका छोरा
गोरे भण्डारीले उक्त कुरा
भनेका छन हाल ल.चु न.पा.-२, मोतिपुर
मैपाल भण्डारी थर हो अछाम सेरावाट
बस्ती आएका छौं । ५ घर छन् ।

**जुम्ला सिजाको परम्परा**

फागुन १ गते कुलापस्ने (कुलाजाने) दिन १ चैत्र १२ गते बिउ रुझाउने दिन-१ चैत्र १३ गते बिउ उमार्ने दिन १ सो बिउ चुला राख्ने चुलानजिक तातोपन गर्ने साथै- परिवार बिउ वरिपरी सुत्ने तातो बनाउने, बिउ उमार्ने सहयोग भनिन्छ । चैत्त २० गते बिउ गडाहान्ने आलीको काल्नोमा तिखोढुङ्गो गाडी चामलको पुवाले पूजा गर्ने । त्यो दिन छोरीवहिनी माइत आउने चामलका पुवाखाने खानदिने सेलरोटी पुरी पनि बनाउने, तिहारको रुपझै मनाउने, सो २० गते छोडी तल माथिका दिन बिउ गडाहाने बिउ पुग्दैन अरुसित पहिले बिउ माग्नु पर्ने हुन्छ यो कस्तो सत्य होला ? सिजाली धान दुइ थरि हुन्छ । सेतो मार्सेको रातो चामल कालो मार्से धानको दाना कालो चामलसेतो हुन्छ- सेतो मार्से रातो चामलले १ माना चामलले १ माना घिउखान्छ नेपाल सरकार बेलायत सरकारले धेरै देशका चामल शक्तिमा पोषटिकत्व जाचदा उक्त सिजाली चामल

पोषण शक्ति भएको चामल विश्वमा छैन । यसले शरीरिक, मानसिक एवं बौद्धिक विकास वृद्धि हुने हुँदा जङ्ग बहादुर राणाले चिसोहिउ पर्ने बेलायतमा जादा यो धानको बिउ लगाउदा यो धान त्यहाँ भएन ।

नेपालका राजा महाराजा तथा प्र.म. (ठुलावडा) हरुले त्यहि चामलको भात खान्थे । त्यो चामल हुलाकबाट ढुवानी नै हुन्थ्यो हुलाक हिडने बाटो बनाउन गाउँ गाउँवाट रैति मुखियाले पठाउथे त्यो, वाटो काटन नजानेलाई जरिवाना गर्थे, हुलाकी देला, हुलाकी मुखिया बनाएका, रकम (तिरो) तिर्नुनपर्ने हुलाक कारणवस अल्जीगो भने तिनिले डांक भनी ति भारि वोकथे । हुलाक रात दिनै २४ घण्टा चलीरहन्थ्यो त्यसको वाटो कसैले पनि ब्लक/छेक्न मिल्दैनथ्यो । छेके जेल जरिवाना हुन्थ्यो । सिजाली रातो चामल काठमाण्डौ सिंहदरबार जान्थ्यो राणा सरकारको पालामा वेलायत पनि जान्थ्यो । विश्वमा नभएको धान सेतोमार्से रातो चामल हो । चैत्र महिनाको २० गते जुम्ली प्रदेशबाट सिजानपुगे मृत्यु भो भनि क्रिया गदर्थे ।

सिजाकनका सुन्दरी देवि शक्तिशाली देवि हुँदा सरकारले पूजागर्दथे । कालरात्री र दशैंमा वोका काटिन्थे । ति वोका राति- वडुवालले कालरात्रीमा काटे कल्यालले ठकुरीले विहान/दिन काटथे । राती कल्यालले काटे दिन वडुवालले काटथे सल्लाह र पालो हुन्थ्यो ॥ सिजा धानबाट । चामलबाट पनि विश्व अघाडि - राज्यमा पनि, पहिलो, ठुलो र कानूनी खासराज्य हो ।

## नागवंशका पदबाट जात थर भए

नागराजका छैटौं पिडिका सिजाधिपाति काचल्ल/पाल जेष्ठ पुत्र अशोक चल्ल/पाल, श्री चल्ल लक्ष्मण चल्ल/पाल, जयन्त मल्ल/पाल, दशरथ चल्ल, पुत्र भैरब चल्ल/पाल वाणिज्य व्यापार सम्बन्धि दक्षथिए त्यससमयमा व्यापार विधि काम गर्ने व्यक्तिलाई बानिया भन्ने चलन थियो । वानिया भन्ने गरेका हुँदाहुदै जातै (थरै) वानिया भयो । हाल मुगु जिल्लामा १२० घर छन् । १०० जनाले नागवंशी वडुवालको नामले नागरिक बनिसकेका, २० परिवारले राज नितिमा वानियाबाट परिचित भएकाले वानिया नै लेखेको पाइन्छ । छोरा नातिहरुका नाम वडुवाल लेखाएको भनाइ सुनाइमा आएको छ । श्री चल्ल पुत्र जयन्त मल्ल कालिकोट जिल्ला राष्कोटको माथि प्यू थर्पुका कोटेराज्यका राजाथिए । त्यहा पाँचवाट स्तम्भ छन् देवलछन् स्वयम्भू मन्दिर छ । वरपर धेरै मुङ्ग्र (धारा) स्तम्भ धेरै छन् ति जयन्त मल्लका कीर्ति हुन । त्यहाँ पाचसिलामा राजा जयन्तको लेखछन् ।

अछाम देवकोट/विनायकमा पँचदेवल छन् त्यी देवल मुङ्ग्रहरु जितारी पुत्र अक्षय मल्लका लेखछन् । विनायक र राष्कोट नजिकै पर्छ । मिति ३/४ महिनाको फरक छ । त्यसबाट नाग/सिजापतिका द्विजराज्य थिए भन्ने प्रमाण प्रष्टै छ । यो समय कालिकोट खाँडा चक्र मलय र्वमा राष्कोटीको शासन हुँदा ८-१० वर्ष पहिल्यको हुनु पर्छ ।

लक्ष्मण मल्ल पुत्र रणजित मल्ल सिजाराज्यको आर्थिक कोष एवं सेना परिचालन सामाग्री सबैको जिम्मेवार प्रमुख भण्डारे थिए । ती भण्डारे लाई भण्डारी बोलाउथे । हुँदाहुँदै भण्डारे पदको भण्डारी हुन गयो । भण्डारे पदको पछि जात/थर भण्डारी भएको छ । भण्डारी सिजापति लेख्दथे । केहि समय देखि भण्डारी सिंह सिजापति लेखेको देखिन्छ । यीनको संख्या कमि नै देखिन्छ ।

काचल्लका जेष्ठ सुपुत्र अशोक चल्ल शक्तिशाली सम्राट थिए यीनका लेख सुर्खेत मंगलगढी, काक्रेविहार दैलेख दुल्लू पादुका, बौद्ध मूर्ति, हुम्ला रेलिङ गुम्बा, बर्दिया दानुवाताल भग्नावशेस, मुगु कराङ जाड गुफा, महाचिन मुरल, भारत गयाजी शिवकुटी, बाराहात शिवत्रिशुल, लधाक गोपेश्वर शिवमूर्ति वंगाल कानपुर, कुमाउ, किल्कन, विहारको स्तम्भ ताम्रापत्रले अशोक हिमाल राजा, आकासे राजा ईन्द्र समान मान्यराजा सूर्य अस्ताउने उदाउँने राजा छत्रपति सम्राट भनि, लेखिएको छ । सिजापति भन्नाले नागले सिजाराज्य स्थापना गरेकोले सिजापति रहेको इतिहास अजमरी सिलामा उल्लेख छ ।



# नागवंशका ईष्टमित्रहरुमा सोली-नली चल्ने

१) रघुवंशी बोगटी
२) सूर्यवंशी रावल (वम)
३) पुवार वंशी सिंह (विष्ट)
४) पुवार वंशी खड्का
५) चन्द्र वंशी पाण्डव कुल
६) गुप्तवंशी हरु
७) कुशवंशी कुँवर हरु
८) खत्री/के.सी.
९) सूर्यवंशी थापाहरु
१०) खप्तडी, फूलौटी खडकाहरु ।

यी थर इतिहाँसद्वारा लेखेका छन् । तत्काल राज काजको समयमा वंशहरु सित वंशहरुले सोली नली चल्ले भन्ने समयका सोली नलि इष्ट भनिन्छन् । धानको बोट डाठ काटी सोली बनाउथे त्यसै सोली द्वारा खानेकुरा दुबैथरिले मुखलगाउनु पर्दोरहछ । नलिपान जोडिएको हुन्छ । हुक्कामा तमाखु खाने क्रमसह भात पनि आउँ छ भन्ने चलन प्रापूर्व कालको रहि आएको थियो । त्यसैकोबादमा कुल, मूल, सोली नलि भन्ने पनि जोडियो । कसको छोरी, कस्की भान्जी, मूल भन्छि । कस्को छोरा कस्को भान्जा सोधिने चलन थियो ।

**देवालीको संदर्भ**

१) जुम्ला कनका सुन्दरी देवि, मष्टो, पूजिन्छ ।
२) दैलेख अछाम पाटके र अधिकारी देवता पूजिन्छ भवानी पनि पूजा हुन्छ ।
३) तिलेपाटा छेपाडी मष्टो, अधिकारी देवता पूजिन्छ भवानी पनि पूजा हुन्छ ।
४) बाजुरा मानिका जोन, देवि र अम्बीका देवि पूजिन्छ ।
५) काठमाण्डौ, भक्तपुर र ललितपुर टिकाभैरु पूजिन्छ भवानी पनि पूजा हुन्छ ।
६) पर्वत, म्याग्दी, गुल्मी, मष्टो र बिन्ध्यावासीनी पूजिन्छ ।
७) धादिङ कंकडा देवि, मष्टो र भवानी पूजिन्छ ।
८) मोरङ, धनकुटा विद्यावासीनी देवि मष्टो पूजिन्छ ।
९) झापा, खोटाङ, ओखलढुङ्गामा मष्टो, वायु, थानी पूजिन्छ ।
१०) मुगु, हुम्ला, बाँसी नागवंशले मष्टो देवाली पूजिन्छ ।
११) रामेछाप मष्टो, भवानी
१२) धनुषा, महोत्तरीमा मष्टो भवानी

**वरुवाल/बडूवाल र राष्टकोटीको सम्बन्ध**

सिजा दुल्लू नागराज सिजापतिको राज्य विगठन पछि पृथ्वी मल्लका पुत्र भय राज मल्ल तिलेपाटा लुसाकोट मा प्रान्तिय प्यू थर्पुमा रहि राज्य गर्दथे । उनका पुत्र तपयराज, दाँमराज, भावैराज, धामराज त्यहाँका राजा थिए । राजा धामराज मल्ल सक्रिय कुशल राजा थिए । पछि धामराज का पुत्र होम पति को राजकाज कमजोरीले होला त्यहाँका माटेहरुले बिद्रोह गरे । यी आफ्नै रैती माटेलाई राज्य दिई राजा मानि बस्नु धामराज राजी भएनन् । धामराजका गुरु भम्पु अर्चाज र सुर्दसन पाध्य थिए । ३ जनाको सल्लाह बमोजिम दुल्लू मलयवर्मा राष्कोटीको राज्य थियो, त्यहि गई रैतिलाई राजा मान्न उपयूक्त नमानि दुल्लू

राजाको राजकुमार लाई राजा मान्ने/बनाउने सल्लाहले हामीलाई ८/२० को लागि राजा हुने राजकुमार देउ भन्दा यहि राजकुमार लेउ यो राजकुमार हो भनि भन्दा चँदारो दिए छन्। लकान्द्र भूडको बाटो भई आउँदा सेलमा बस्दा त्यहाँका राम्रा राम्रा गिठाका रुखनेर बसाले त्यो राजकुमार हुनेले यो गिठाका पारा, ठेकी हरु के हुन्थे भनेछ। चँदारो रहेछ, चाहिनेइ हो भनेर धमकोट चौकिमा बस्ती राखे पुन दुल्लू गए। त्यो चदारो जातिरहेछ राजकुमार देउ भन्दा यो राजकुमार लेउ फडारो जाति दिएछन्। बाटोमा जम्बुकाध को बाँसको झ्याङको छाँयामा बसे बसाले यो बाँसका चोया के आउथे भनेछ। फडारो रहेछ , चाहिनेई हो भनी यै आग्रठिमीरेमा बस्ती राखि पुनः राजामलय बम/बर्मा सित गए त्यो फडारो रहेछ चाइनेई हो, राजकुमार देउ भन्दा माझी दिए राजकुमार हो भने, त्यसलाई साताला चीने जिउलाको बाटोमा लिए सिमलको छायामा बसे, उसले यस सिमलका नाउ र दाउला के हुन्थे भनेछ यो चाहिनेइ हो भनि भेलतडिमा बस्तीराखे, पुन दुल्लू गए बुसाल दमाइ दिए। बिजारेको मसाने बाट ल्याइ छायामा बसे उसले राम्रा चमडाएका रुख देखी यसका गजा के हुन्थ्यो भने, यो दमाइ रहेछ चाइने हो भनि तिलेपाटामा राखे, पुन दुल्लू गई राजकुमार मागे भूल दिए। त्यसलाई सोहि बाटोमा ल्याई छायामा बस्दा टिकुलीका झ्याङ देख्यो। यस बोटका चाल्लका वाडा क्याहुन्थे भनेछ भूलरहेछ चाईनेइ हो भनि दानीमारे राखे, पुनः दुल्लू गए धर्ना दिए राजकुमार चाहियो भने। राजा मलय वर्माले आफ्नो लाटो राजकुमार दिए। रानीबाठी , चलाख रहिछिन् ८/२० काटमार गर्ने ठाउ हो मेरो लाटो राजा लिएर जान्न भन्दा दुल्लू सिउवाघ पादुका कालभैरभका टागामा घुमी धामराजले तल घिचेल्टो तिलकी वमको माथि घिचेट्टो मेरो हुनेछ , भन्य धित कबोल गरि तिलकी बम राजा ल्याउने तयारीमा हुन रानीले मेरो दमेनी लिन्छु साथमा भन्दा लिने सल्लाह भयो। बाजाहरु बजाइ रानी डोला मै आईन जम्बुकाध धुविधारको उकालोमा आइपुग्दा गर्भिणि दमेनी पैदा (बच्चा जन्मएको) भइन र दमेनि पनि डोलीमा आइन। बालकलाई पूर्व राजा धामराजको झोलामा राखि ल्याए। तिलेपाटा ल्याए राजाको हर्कवडाइ भयो, पछि राजा तिलकी वमले ति द्वन्दकारीलाई काटी मारि दिए।

उखान- चौकिको चँदारो, ठिमुरेको फडारो, भेल्तडे घटालो , दानीमारे भुल बुसाल दमाई तिलकी वमराजा धामराज वरुवाल पूर्वराजा र सम्भू अर्चाज सुदर्सन पाध्याको एक जोतो मोतो गरियो भन्ने कुराको उखान छ। पूर्व राजा धाम राज बडुवाल र तिलकी वम राजाको सहमतिका आधारमा राज्यको कार्य कुशल पूर्वक विकसिदरुपले चलेको पाइन्छ।सल्लाह र सहमति बाटको काम नै विकास हो भन्ने पाठ देखिन्छ। तर केहि काल पछि राजा तिलकी वम ले उत्ताउलो हिसावले अछाम बाँचटाडी लुलराजाको रानी अपहरण गर्दा बाँचदाडी लुलको कटक फौजले जारकाट्ने नियमले कट्का आएछ। राखम दुनिकाको २२ पाथि दुनिकामा भान्सा गर्दा उक्त दुनिका लुलराजाको कटक को पौलाले (जुनाले) भरिएको हो/थियो भन्ने लोकोक्ती मा छ। ति राजा तिलकी बम तिलेपाटा आए कटक पछि पछिछ। पूर्व राजा धामराजको धर्म पत्नीले आफ्नो घर भित्र राजा तिलकी, लुकाई लुलराजालाई भाई मानी खसी बोका सहीतको भान्सा भोज गरियो। बिहान लुलराजाले दिदी तपाईको घरभित्र पसेको मेरोजार बाहिर निकाल काटेर जान्छु भन्दा यो त मेरो छोरा हो भाइ भनीन् भान्ज नाता परे, केराको बोटा ल्याउत काटेर जान्छु भान्ज काट्दैन खाडो खाली लिदैन भन्दा पूर्व धामराज राजाको धर्मपत्नी/रानीले केराको बोट ल्याइदिन सो केराको बोट काटेर गएछन्। पछि राजा तिलकी बलमे धामराजको धर्मपत्नीलाई मेरो साँच्चीकै आमा भयौ बचायौ अव के लिन्छौ ३/४ वटा गाऊ दिन्छु, लिन्न, सुंचुरा श्री पाउँ दिन्छु लिन्न, तिम्रो राज्य फिर्ता गर्छु, लिन्न राज्य एकाछिनको, गाउँ, सुनचुरा एकछिनको हो कहिलेइ नछुट्ने डौटो देउ भन्नुमा के हो त्यो चिज भन्दा तिम्रा घरमा शुभकाममा काटीएका खसी बोकाको (मुडि/घिच्चेटो) दिनु भन्नुभो, राजा खुसी भइ स्वीकारे सारै खुसीको सौगाद भयो र आजसम्म राष्कोटी

परिवारले स्व खसी बोकाको मुडी/टाउको दिन्छन्, हामी सौगादको हिसावले फिलो दिन्छौं। यो राम्रो परमपरा रुढ भएको छ।

पहिल्यको चलनमा ति ठकुरीका रानी (श्रीमतिले) रोपाईमा खेतमा धान नरोप्ने (रोपाइमा धान नरोप्ने) चलन थियो। बुसाल दमाइको दमेनी ले पनि ठकुरीको रोपाइमा खेत नरोप्ने ति ठकुरीको रानीलाई तपाइ पनि डोलामा हामी पनि डालामा आएकी छौं। तपाइले रोपे मात्र हामी रोप्ने, तपाईले नरोपे हामी पनि रोप्दैनौ भनि ठकुरीको रोपाइ खेत रोप्दैनन्। बडूवालका अरुका खेतरोपछन्। यो परम्परा हाल पनि शेष छदैछ। हरेक कामको सिलसिला धामराज बडुवाल, तिलकी बमराजा सम्भु आर्चाज, सुदरसंन पाध्या र चौकीको चाँदारो, ठिमुरेको फँडारो, भेलतडे घटालो, बुसाल दमाइ र दानीमारे भूल एक सल्लाह एक व्यक्ति नै मान्नु पर्ने भनाइ रहेको देखिन्छ। यो कुरा यि जात जाति र अन्य अछाम, आठ विसका जनता कै मुखमा सुरछित छ।

यस्तो पुर्ख्यौली धर्म, कर्म र विधि विधान छँदा छँदै दैलख सिंगौडी गा.वि.स.हाल ८/२० न.पा. सिगौडि बाँसी, जया जैसी भन्नेले पूर्ण प्रकास नेपाल यात्रीलाई तिलेपाटा धामराज बडुवालले त्यहाँका जनतालाई चढाइ गरेको ले मेरा वाज्य सुदरसनले विलासपुर बाट त्रिलोक्य तिलकी बमलाई बोलाई गाइजात्राका डाँडामा ७ दिन सम्म धुमधाम लडाइ भयो। घामराज प्रास्त भए भन्ने भुटा कुरा लेखाएछ। पछि सिजा ईतिहाँसको रुपरेखा कितावको पे.नं. ६७ मा लेखेको देखियो। काठमाण्डौ फैयक गा.वि.स. मा उसैको घरमा गई गाईजात्राको डाँडा नाम २०१५ सालमा रहेको हो। घाँसे संग्रातीमा बिनाईक मष्टमाडू जात्रमा जान, तिलेपाटा, नहदुन, विसालाका मानिस नदी राखम उल्लभेल भै तर्न सकेनन्। त्यसै घोडा बान्नाको डाँडामा खेल लगाई घाँसे संग्रान्तिको दिन हुँदा गाईजात्राको डाँडो भनेका छन्। तिलकी बमको धामराज बडूवालको साथै, चौकि चदारो, ठीमुरे फडारो, भेलतडे घटालो दानीमारे भूल र बुसाल दमाइको धित धर्म सुनाउँदा पूर्ण प्र नेपालले सिगौडि जया जैसीले यसो कुरा भनेर लेखे गल्ती मानिस जया जैसी रहेछ भन्ने थाहा भएन त्यसलाई सच्याउछु भने, सच्यायको छैन होला। उक्त जया जैसी नन्दे जैसीको छोरा हो दन्दे बितेका नौ मासमा जन्मेको हौं, आज धनि मुखिया भयो हामी पनि २०३२ सालमा जया जैसील्ये भन्थ्यो,भने इतिहास लेखाँए यो लेखाएको केहि समय पछि किताव हेर्दा त्यहा हुँदा फैक पूर्ण प्र. को घरमा पुगेका हौं। इतिहाँस भन्ने कस्तो पूर्ण प्र.लेख्ने कस्तो भुटा भन्ने भुटा लेख्ने इतिहाँस भन्ने, यो उब्जएका कुरा गलत छन्। माथिका जातजातिहरुका मुखमा राष्कोटी र बडूवाल लगायत ७ सात जात जातिका कुरा, धर्म भएको कुरा सबैको मुखमा सुरक्षित छन्। रुप.रे.पे.नं.६२ मा गलत लेखाएको छ भने,।

तिलकी वम धमराज बडूवालको संयूक्त ताम्रापत्र तिलेपाटा बहादुरे बडूवालको घरमा थियो एैं तोलिपाटाका मुखिया नवराज शाही ले पढ्ने हेर्न भनि लिएछन्। लामो समय पछि नवराज शाही सित माग्दा गैरागाऊ मुखिया रंग ब. शाहीले हेर्न भनि लगेका छन् भने। रंग ब. शाहीका छोरासँग ताम्रापत्र माग्दा बुसाल दमाईले आसिकामा (अशिकमा) भनौला (भन्छु) भनि प्रतिलिपि उतार गर्न लिएको छ भने। दमाइले मेरो घर जल्दा जलिहालेको छ अरु दमाईले उतारेका छन्कि उनिहरुसँग सोधौला पछि खबर गरी दिउँला भने। जेहोस् उक्त ताम्रापत्र गाईब गरेका अनुमान गर्न सकिन्छ। अरु नागवंशी नागराजका पाला देखि हाम्रौ पुर्खा तिलेपाटा आएका सम्राट अभय राज मल्लका ताम्रपत्रहरु छन् उतार गरी इतिहासमा चढाई सकेको पाईन्छ। ॐ शिव नमोनम:

**सिजाको रुपरेखा इ.पे. नं. ६७ मा**

आफ्नो केहि कुरा वंशजलाई थाहा हुनु पर्छ तर पूर्ण प्र. खनाल भन्ने व्यय्क्रिले इतिहाँस भनि रुप रेखाको ६७ पेजमा :-पूण्य मल्ल निशन्तानी लेखेको दुल्लू कीर्ति खम्ममा पूण्य मल्ल पुत्र पृथ्वी मल्ल छँदा छदै संग्राम मल्ल निशनतानी आदित्य मल्ल पनि निशन्तानी पुत्र कल्याण मल्ल छदा छदै पृथ्वी मल्लको पुत्र अभय मल्ल छँदा छँदै कौवाले यस्ता गलत लेखेको छ।



## पृथ्वी मल्लका कृतिहरु :-

**पृथ्वी मल्लका कीर्ति :-** पृथ्वी मल्लले आफ्नो शासन कालमा जनतालाई सम्पूर्ण कर बाट मूक्त गरे। जनताले राम्राश्रेष्ट राजा पृथ्वीले कलियूगलाई सत्ययूग फर्काय भनिएको छ। पृथ्वी मल्ल सम्राटका महान ताम्रपत्र कनकपत्र र कीर्तिहरुले देशकालमा उज्यालो देखिएको, हुनु पर्थ्यो, भयो होला पनि माथिका शब्दले नाग वंशको पूर्ण इतिहाँस दुल्लू विजया/कीर्ति खम्बले बोलेकै छ तर पनि यो सम्राटका सक्रियताका कृति कलाहरु थोरै विउझाउनु छ।

दुल्लू कीर्ति खम्वा, ऐ. पेदैवल, दुल्लू सेरोफेराका मुङ्गाहरु डाँडिमाडी, बढलम्जी, छिउडि, छडङ सेरोफेरोका सिलास्तम्भहरु जाजरकोट जक्तिपुर मुङग्रा, कालिकोट मूल वाटाका वाधा दुङ्गाका लेख, कुच्ची व्याप्यग मुङग्रा, अछाम तोलीगाऊ स्तम्भ, अछाम वगलदेउ, तोसी, ढकारी, सेराअछाम स्तम्भ, धमाली देवल, तोसीसिला, धोडा सैन, हाउडी लेख, भर्ता, कालिकोट सिला लुडकु बाटोका ८ देवल चट्टानका लेख, सिजासेरी ढुस्काको बाटोका १७ स्तम्भ अछाम धोडासैन माथि डाडाका सिला लेख , कालिकोट पाखा चौकिका अभिलेख, डँडेलधुराका सुका पोखरी, देवल, डोटी अछाम दर्नाकोट पूण्य देवल, दार्चुला, बाजुरा डाडा खम्वा, डडेलधुरा पर्खाल, डोटी कुन्डादेवल, बाजुरा कोल्टी सिला, गिन्ती गरि नससिने हुँदा नागवंशी राजाहरुका सिलालेख अजम्मरी कीर्ति हेर्दा दैलेख ठाटीकाध गा.पा.न. ४ गैरागाऊ बासी पूर्व गा.वि.स. सचिव भक्त ब. शाहीले यी राष्कोटी ठकुरी हुन्, यी नागवंशका सिलाकृर्ति देशविदेशमा दर्ता राजा अशोक चल्ल पाल क्राचल्ल र नागका इतिहाँस विश्वसुचीमा रहेका, भारत तिब्बत भोट चीनका कीर्तिहरु लेखोट कृति हेरी भन्नु भो हाम्रा पुर्खा र अरुहरुका वंशका राजा हुने भन्नेहरु त ढुङ्गा हान्ने राजा पो रहेछन्। कीर्ति प्रमाणित उत्तर दक्षिणका देशमा एव. नेपालमा वंशालीमा थोरै नाममात्र गोपाल वंशालिमा काम कीर्ति देखिए भन्ने राय लेख्नु भयो। नागवंश बाहेक अरु वंशका कीर्ति हरु सिला स्तम्भ छैनन्। त्यसैले ढुङ्गा हान्ने राजा पो रहेछन् भन्ने अनुमान देखिएको भनेको हुन्।

**पहिलो दुल्लू तर्फ जाऊँ।**

पहिले पहिलेका कुरा इतिहाँस हुन्छ दुल्लू नाम रहनाको काम, कारण इतिहाँसका लेखले दुर्लभ, भद्रपाल दुल्लूमा राजा थिए। दुर्लभ नामबाट दुलंध्य देश हुँदै दुल्लू नाम बनेको हो (१ भूगोल रमणि, पृथ्वीमा हुने बोट बिरुवा, जीवजनावर सोच्छ हावा पानी वौन धर्मको आधारमा सक्तिशाली बैशग्रम, बैशेनर एवं ५ थान पंचकोसी ज्वाला जो स्थल बोध धर्मकारी हरुलाई संतोष (१, वौन, बुद्ध, हिन्दू धर्मले नागदेवताको वर्णन, पानीमा ज्वाला बल्ने दैवी, शिव शक्ति ठानेर विभिन्न कालखण्ड तथा धर्मावलम्वीबाट समेटिएको चुनीयको भूगोल/स्थल दुर्लभ्य देश तत्काल सिजाहाट दुल्लूनगर भए भनिएको स्थल यदि आदि जतातत्तै बाट उत्तम पवित्र दुल्लू भारत भोटका बीच र मुलबाटो मल्ल/नागकालको सितकाल सिजाको राजधानी नागवंशका छैठौं राजा क्राचल्का स्तम्भमा दुल्लू स्थल सम्राट क्राचल्ल देवले लेखिएका एउटा इतिहाँसमा भोट/चीनको मुद्धा दुल्लू दरबार बाट छिनिन्थ्यो भन्ने लेख पनि भेटिएको छ। हालको प्रस्थितिले दुल्लू धुलेखर स्थान, पादुका र नाविस्थानका डिजल, पेट्रोल, मट्टीतेलका खानीले ६ सताब्दी नेपाललाई रसायन पदार्थ दुल्लू वैशणम द्वारा समय अनुकुल दुल्लू महत्वमा बसेको छ। दुर्लव शब्द नमिल्न हतपत बिच हो। दुल्लूको त्यस स्थानमा परापूर्व कालदेखि दुर्लभ शब्दको महत्व उच्चीदै गइरहेको छ।

**नागराज धानी भन्ने पद**

दुर्लध्यनगरका कोटी स्तम्भले नागराजा न्वयन लेखिएको छ र मानसरोवरमा नागराज धानि भनिएको लेख छ। नागराज्यमा प्रत्यक वैशेनर रहन गयेको स्थानीय प्रशिद्धिका नागराज, अषाड राज, खस राज, खसानराज, हिमज्यू, हिमालीराज, भोटान्तराज, हिमराज, पर्वतराज हुनु पर्ने नागराज खसराज्यको स्थानमा इत्यादी अविधान छन्। नागराजको सन्तानहरुको राज्य शक्ति क्रमोशसह: शासक, भारत, चीन, भोट/तिब्बत र नेपाल सिजा खस राज्य (स्थापित) सिजापति, महाराज, खस पति श्री अशोक चल्ल भनियको छ। सिलालेखमा उत्तकृष्ट लेख उल्लेखित छन्।

त्यसमा आदित्य वंशोओ भवदी पालओ नृप: यि शब्द सम्राट पृथ्वी मल्ल नागराज पाल हुन भन्ने देखाउछ (जनाउछ)। १८।१९ पाल राजाका नाम र १६।१७ वटा नागराजका नाम दुल्लू कीर्ति स्तम्भमा किन लेखे त, आफ्नै कुल वंश-वन्धु भएर नै होला ? यी प्राकृति. ले लेखेझै झ्याउ परेका „ देवल स्तम्भ सिलाहरु नागवंशका कृर्ति र गहना हुन।

यस्ता कीर्तिमा अजमरि प्रमाण छँदाछदै नागका संतति, सूर्य, जयन्त, चुफिचल्ल, लक्ष्मण मल्ल दशरत मल्ल, अक्षय मल्ल, जालन्धरी मल्ल आदिहरुलाई मोनोपलि, खेलवहाड गरियेको पाइएको छ। क्रमबद्ध सत्यको तत्थे दिशामा लैजाने सोच समाज सुधार धारणाक व्यक्तिको दायित्वमा आएको छ।

रुपरेखाको पे.नं. ८४ मा नागका छोरा चापले नाता, साईनु सनेव रचेका उत्पादन गरेका छन्। ऐ.पे.नं. १९ मा श्रीपाली सिजापति पाल हुन भनेको छ। पाल यीनी अशोक, जितारी, आनन्द, जालन्धरी, रिपु, संग्राम, कल्याण, आदित्य, प्रताप, पृथ्वी, अभय, तपय, दामराज, भावैराज धामराज देखिन्छन् तर नागराजले नाग पाल हुँ भनेका छन्। क्राचल्ल, अशोक चल्ल पाल हुँ भनेका छन्। पाल र नाग साठी-तीनबिस भने झैं हुन्। बरुवाल/बडुवाल पनि साठी-तीन बिस भने झैं हुन्।

**मल्ल/सिजापति कर्णाली लो.सं.ई. पृष्ट ५८**

पालको झैं नै नागले पनि देव, चाप, चल्ल, सिजापति मल्ल बरुवाल/बडूवाल थर (पद) लेखेका छन्। सिजापति मल्ल राजाले थर्पु, गुठी, बृता, भूमिदान दिने पर्था नियम बनाएका, चलाएका थिए। कर्णाली लोग सं.इ.पे.नं. ६० जुम्लाका बाहुनहरु र अन्य जातिहरु लाई पूर्व वागलुङ, गुल्मी, पर्वत, म्याग्दी, रामेछाप दोलखा सिन्धुली र मुस्ताङ जिल्लामा जग्गा भूमिदान दिएर बस्ती पठाएका थिए। सिजापति शासन लोप हुँदा त्यहाँका कोटेशासकले तिनीहरुलाई आफ्नै ठाउँमा जाउँ भनी पठाउँदा सिंजा (जुम्ला) राज्य पठाइदिए। जुम्ली राजा वलिराज शाहीले आफ्ना रइती राख्न जुम्ला ५०० दरा मेलसेरा गाउँमा बस्तीबसाले। त्यस गाउँको नाम पूर्व बाट फिर्ता मेलसेरा गाउँ मेलसेरो जात भएको छ। भनिन्छ।

कर्णाली लो.स.ई.को पे.नं. ९६ दुल्लू श्रेष्ठ महाराज धिराज पृथ्वी मल्लले दुल्लू कीर्ति/बिजया स्तम्भ शाके १२७९ बि.सं. १४१४ मा अभिरोपित गरेका हुन भन्ने लेख छ। तिथिमितिले गर्दा १२८० जेष्ट पूर्णिमा पारि अभिरोपित गरेको हो। ऐ.क.लो.कै पे.नं. ७६ मा पूण्य मल्ल जयपाल द्वितीय श्री जावको छोरा पूण्य मल्ललाइ नाग मल्लका छोरी जुवाइ भन्न हुँदैन भनिएको छ। ऐं.इ.को.पे.नं. ७८ मा पृथ्वी मल्लका पुत्र सम्राट अभय मल्लका ताम्रपत्रहरु १२८८-१३९८-१३०९-१४६१-१४३३ र १३०५ का ६ वटा ताम्रपत्र छन्। यी ताम्रपत्रको मर्म सिजा राज्य लाामाथाडा कै नाम सम्बोधन छन्। धुन्टी, थर्पुराज्य बढीभाग थर्पुमा नै घुण्टी राजा होइवक्से कै देखिन्छ। तिब्रिकोट, बभाङ डोटी, सल्यान, जाजरकोट, डोल्पा, मुगु, तिब्बत वागलुङ म्याग्दीमा बसी म्याग्दीका कनकपत्र पनि भेटीएको छ। अन्तमा दैलेख तिलेपाटा लुसाकोट दरबार बनाइ

त्यही जीवन बितित गरेका नावालक तपतैराज थिए। यीनका राज्यभिसेक बभ्फाङ गोलाई गाउ उदम्बरपुरि ठाउँमा भएको थियो । बभ्फाङमा थलारे खोलाको पैंदेवल निर्माण गरेका थिए । मौशन सोतीलाई भूमिदान दिएका कनक ताम्रपत्र सिजालामाथाडा भनि संबोधन छ । त्यस्तै तिब्रिकोट मा गरियेको ताम्रपत्र सिजा लामाथाडा सम्बोधन गरिएको थर्पु धुन्ती राज्यमा गरियेका ताम्रकनक पत्र सिजाराज्य सम्बोधन छन् ।

यसमा लेखिएको छ सिजा राज्य १४६१ मा वलिरावलले हातपारे भन्ने लेख छ। गघीशिनभए उलेख छ। क.लो.स.इ.पे.नं. ९० मा छकालका वलिरावल बाहा वलिराज। बलि रावल राजा भय (बिसै-रावल) वाज, विसै रावल वाजका राजा भए भनिएको छ।

## सि.को रुपरेखा ई.पे.नं. ४०

दुल्लू नाम रहनको कारण सिजाको रुपरेखा ईतिहाँसको पे.नं. ४० बमोजिम दुल्लू नाम रहनको कारण सिजा तथा दुल्लूको उत्थानमा कास्मिरको बढी योगदान छ। तिब्बत एवं भोटको पनि बढी योगदान रहेको छ । त्यस कारण बिस्तारण बिस्तार पूर्वक खोज गर्नु पर्छ । कास्मिरका राजा दुमील आदित्यका पुत्र ललित आदित्य ललितका पुत्र दुर्लभ आदित्य जस्लाई दुर्लभ भद्र आदित्य पनि भनिएको छ। देवपाल हाम्रो दुल्लू स्थित प्राचीन अभिलेख अनुसार दामुपाल दुर्लभ देशका दुर्लभ आदित्य हुन। तिनैको नामबाट दुल्लूदर्लभ देश भनिएको छ। रुपरेखा इतिहाँसको पे.नं. ४४ देव आदित्य देवराज नागराज हुन्। यी दानव भूतलका राजा थिए। यी नागवंशका वंश हुन भनिएको थियो।

ऐ.इ.को.पे.नं. १० मा अध्ययन गर्दा मल्ल पदको पालामा सिजाको बासन बाजुरा कोल्टी दानीगौडामा राजप्रशाद हुन्थ्यो । प्रमाणन्थ कोल्टी फूलबारी अरुवा ढुङ्गामा भएका उत्कृष्ट लेखबाट र अछाम बिनायक पंचदेवलको लेखबाट जानकारी हुन्छ। सिजाको रुपरेखा इतिहासको पे.नं. १३ वमोजिम आनन्दजालन्धरी मल्लका दुई छोरा थिए। सूर्य मल्ल र रिपुमल्ल जेठा रिपु थिए। लुम्बीनी र कपिलवस्तु तथा निग्लीहवामा नागवंशका चल्ल पालका लेखबाट नागवंशले देवचाप चापिल्ल मल्ल सिजापतिको बारेमा स्पष्टै लेखेको छ।

**अशोक चल्ल पालका लेखहरु ।**

१) भारत गोपेश्वरको लेख सिला ।
२) बुद्धगयाका दुई अभिलेख ।
३) गयाको सिलालेख ।
४) महाचीन सिरमोहरका अभिलेख ।
५) तिब्वतको स्तम्भ अभिलेख ।
६) लुम्वीनी अशोक स्तम्भमा थप लेख ।
७) सुर्खेत मंगलगढी, काँक्रीबिहार ।
८) बर्दिया दानुवाताल भग्नावेश
९) कुर्माञ्चल र डेरादुनका लेख ।
१०) केदार खण्डका अभिलेख ।
११) रामेश्वर ठुलो स्तम्भ लेख ।
१२) गोपेश्वर त्रिशुल लेख ।
१३) बाराहाट शिवको त्रिशुलका लेख ।
१४) कानपुरका आदि लेख ।

**अशोकका पिता क्राचल्लका कृति**

१) नागपहाड सिला लेख ।
२) नागचल पहाडका लेख ।
३) द्वारा हाट सिलालेख ।
४) वंगाल गौडका सिलालेख ।
५) केदार खण्डका अभिलेख ।
६) कानपुरका सिला लेख ।
७) पायापुरी अभिलेख ।
८) पिथौडागढ कालिका मंदिरको सिला उखेली फालेको देखिन्छ ।

यी लेखले खसपति, हिमज्यू, सिजापति, छत्रपति, हिमाल पति, तारापति भूपति आकास पति , इन्द्र समान श्रेष्ठ सम्राट पदवि लेखेका अजमरी महत्वका सिलालेख ले सवै पति शब्द जन्माएको हो ।

आदित्य मल्लको १२४३ को ताम्रपत्र

यो ताम्रपत्र दैलेख जिल्ला कार्यालयमा सुरक्षित छ। अभिलेखको पत्रमा शंख, खड्ग र आदित्य मल्लका मुद्रा अंकित छन् । ताम्र पत्रको देब्रतिर सिराँतमा अलिकति भाचीयकोले एक शब्द लोभ छ। यस अभिलेखको प्रकासन यसै अनुसन्धान वार्ताद्वारा पश्चिम नेपालका केहि अप्रकासित अभिलेख शिषएक अन्तरगत कन्ट्रिब्यूसन टु नेपाली स्टडिज भोलम ७ सं १ र २ पौष (२०३६ अषाढ २०३७) १७७-७८ मा गरिएको छ।

अभिलेख पाठ ।

१) ......सेजा सिंजा समावासित शुभस्थाने पुर्वरि दोईड चडि र समाकान्त ब:..

२) .......दर्तान्त बिराट पिठाधिस्ठित देवता परिचार्य पारायण राजकंस नारायण :(

३) जभजवल मल्लराज, सरस्वती कंठाभरण, राजको दंड विधाजुनराज प्रतापमति

४) डा. प्रतिज्ञा पूरणैक प्रसुराम निस्सिम शाह बिरदेता विक्रमादित्य प्रम्ति

५) विरुद्धावलि विराजमान परम भट्टारका महाराज धिराज परमेश्वर श्रीमदादि ।

६) त्य मल्ल देव शान्तपुर सकुमार सपरिवार चिरंजयन्सु राईका पाय मोखा

७) पसाकि अत्रि पभछोजोईसिका कान्साचेला पदमनाम छातुदुहुजना

८) ताम्कु जोख्योभाटको आ( १ बहोरा, तोला जैसीको आ.१ वाहितामाको आलो (८

९) थापाको हुदोयति आला सवेकर दोहोलोकरी पसाकि अक्चाछु ।

१०) आदित्य मल्लको शाखाप्रसाकर पग्धोजैसीको शाखाभूं चंदिक, करी कुर्म: ।

११) कुलाचल कागिपति विधृतापि चल्ती बसुध्ययम प्रतिमान्नम मलमन सा नच: ।

१२) ललि पुँर्सा यूगानतेपि ॥ २ ॥ श्री शाक्य १२४३ आस्विन सुदि बृहस्पति वारे ।

**व्याख्या**

यो ताम्रपत्र आदेश जारी गर्ने , आदित्य मल्ल खस राज्यका विशिष्ट राजाहरु, मध्य एक थिए, योनी खसराज्यका संस्थापक नाग राजका आठौं पुस्ता उत्तराधिकारी थिए । हालै यीनका शाके १२३८ वि.स. १३०३ को एउटा ताम्रपत्र प्रस्त भएको छ । यीनका पालामा दुईपटक सम्म खसहरुले/नागहरुले काठमाण्डौ उपत्यकामा आकरमण गरेका थिए (हुन्) । गोपाल वंशावलीले, उल्लेख गरेको छ । गो व. पृष्ट ४४।४६ उनको पछिल्लो आकरमण वि.स. १३०४ को अन्तरिर भएको थियो । यस बाट उनले कमसे कम ११ राज्य, चलायको प्रमाणित हुनु पर्छ (हुन्छ) । खसराज्यको ग्रिस्मकालिन राजधानीको रुपमा सिजा र सितकाल विसट पिट दुल्लू दुवैको उल्लेख ।

खसराजाहरु वौध धर्मावलम्वी थिए । आफू बौध धर्म मान्ने भए तापनि, आदिन्य मल्लले हिन्दू व्राहमण हरुलाई कुनै कर नलगाउने गरि जग्गा दान दिए र कदर गरि यो ताम्रापत्रको आदेश जारी गरेका थिए । यसबाट खस राज्यका हिन्दू र वौद्ध धर्मको भेदभाव गरिदैनथ्यो भन्ने बोध हुन्थ्यो (हुन्छ) । यस ताम्रपत्रमा आदित्य मल्लले सोहदर सार्व भौमसत्ता सम्पूर्ण समपत्र, हिन्दू राजाहरुले दिने गरेको परमभट्टारक महाराजधिराज परमेश्वर भन्ने बिरुध धारणा गरेका थिए ।

देवले पनि—'उप्रान्त, राजा रामसाहले, बाँध्याको थिति, पनि हेरि, सकेँ, राजा ज्येस्थितिमल्लले, बाध्याको स्थिति, पनि हेरि, सकेँ, राजा महिन्द्रमल्लले बाध्याको थिति, पनि हेरि सकेँ, ईश्वरले दियो भन्या, म पनि यस्ता बन्देजको, ताह हजार (गोर्खाको) स्थिति बाँधि जाँला' इत्यादि भनेर दिलायेका छन् ।

'प्राज्यराज्यरक्षाक्षमप्रचंडनिजभुजदंडकुंडलितकठिनकोदंडनिर्मुक्तनिशितशरनिकरनिर्भिन्नाराति' । हुनाले पृथ्वीमल्लले धनुर्वेदको मर्यादा राखेका रहेछन्, भन्ने पनि बुझिन्छ ।

—***—

# जगज्ज्येष्ठ जुमलेश्वर अपाडराज सेँजाधिराजपृथ्वीमल्लदेवको दुर्लङ्घ्यनगरका कोटिस्तम्भ (कीर्तिखम्भ) को अभिलेख

ॐ मणिपद्मे हूँ [ दक्षिणपट्टि ]

[१] ॐ स्वस्ति । सेवे पदोऽस्मद्वचनं
[२] दात्र [न] शौण्डं विनायकं । यो दोष
[३] श्चतुरो भवे प्रजानां शिवभा वतः
[४] आदित्यवंशेभवदादिपालो नृपः सु
[५] तोस्याभरपालभूपः । सुतस्तदीयो जय
[६] पालभूपस्तत्सूनुरासीद्विजयादिपालः
[७] २। श्रीगीरपालो नृपतिस्ततोभूत्तस्मा
[८] दभूद्विक [म] पालभूपः । श्रीपालभूपस्त
[९] नयस्तदीयः श्रीधीरपालं तनयं स ले
[१०] भे ॥३॥ सोमपालो नृपस्तस्मात्सूर्यपाल
[११] स्ततोभवत् । तज्जः समुद्रपालोभूत्सुख
[१२] पालस्तदात्मजः ॥४॥ ततः ख्यातोधो
[१३] शोजनि विग [्र] हपालक्षितिपति [ः सुतो
[१४] जातः श्रीमान्भरराजमर्दपालनृप
[१५] तिः । स जित्वा संख्येरीन् विहितवसति
[१६] गौंद्रविषये तुरंगैर्बाह्यानकृत नि
[१७] पुलांश्रीनन्नृपतीन् ॥५॥ शृ [स्रं]गीतुण्ड [ञ]
[१८] द्वयं पृथ्वीनिवृत्तवसुतात्रयस्तुला [स्तला]
[१९] नात्र [स-वत्] भुमत्सारे सत्येव्रासक्तिपु क्रमे
[२०] ······ ॥६॥ विषये भुमकाराख्ये
[२१] विश्वपालाह्वयो नृपः स्तंभकृत्वात्सपत्ना
[२२] [नां स्फीतं] राज्यमवाप सः ॥७॥ टिनरेन्द्र
[२३] कुले जातो जीवपालाह्वयो नृपः । श्री
[२४] गेलाह्ननृपालेन्द्रो [पो गाढं] भोका गेलाह्वयं चि
[२५] रं ॥८॥ रचयन्नचलं रागी सोत्सवं सर
[२६] जो नृपः । श्रीजावाख्यो नृपस्तस्मादज
[२७] निष्ट महायशाः ॥९॥ पुण्यमल्लाह्व
[२८] यः श्रीमान्नृपस्तस्मादजायत । साध्वी
[२९] स्त्रं [गं] जनमालाख्या सद्वंश्या तन्महिष्य
[३०] भूत् ॥१०॥ श्रीमल्लनामधेयोस्ति प्रथम
[३१] स्तनयस्तयोः । जयन्त इव लक्ष्मीवा
[३२] न् शचीनमुचिविद्विषोः ॥११॥ अथ
[३३] खारिप्रदेशस्थो यो जावेश्वरतामगात्तेन
[३४] श्रीनागराजेन सेँजापुर्यां स्थिति[ः]कृता ॥१२॥

ॐ मणिपद्मे हूँ [ उत्तरपट्टि ]

[१] ॐस्वस्ति । तस्माच्चापस्तस्माच्चापिल्ल [ः] [२] काशिचल्ल इति तस्मात्तस्मात्क्राचि [चि]
[३] चल्ल[ः]क्राचल्लसुत इति क्रमाद् भूपाः॥१३॥ [४] क्राचल्लजो भूभृदशोकचल्लो दिग्भित्ति
[५] पु श्रांतिलतां ततान । जितारिमल्ल
[६] स्तनयोथ तस्य तत्यात्मजोथानन्द
[७] मल्लनामा ॥१४॥ अशोकसुत आनंद
[८] मल्लस्तदनु तदुभवः । रिपुमल्लोथ संग्राम
९—मल्लस्तस्य तनूभवः ॥१५॥ आदित्य
[१०] मल्लोथ जितारिसूनुः कल्याण
[११] मल्लस्य नृपस्य तातः । काल्याण
१२—मल्लिः प्रथतेस्म भूमौ प्रतापमल्ला
१३—ह्वयभृत् क्षितीशः ॥१६॥ स स्वयं ना
१४—गराजस्य नैवाशे ,यदन्वयं । अथ

१५—गेजान्वयः पुण्यमल्लस्तत्राभ्यथि
१६—च्यत ॥१७॥ ततःशकुनमालाया (यां)
१७—खंटमालाभिधां (धा) सुता । सुतश्च पृ
१८—थ्वीमल्लाख्यो जातो [तस्त] त्र क्रमाद्धि
१९—मां ॥१८॥ साम्राज्ये स कुलापात
२०—समायातमहीभृतां । धीरश्रीपृथि
२१—वीमल्लः ख्यातकीर्तिर्विराजते ॥१९॥
२२—धनानि ददतार्थिभ्यो धर्मकर्माणि
२३—कुर्वता । पृथ्वीमल्लेन भूभर्त्रातिष्य (ष्य-ष्यः) 
२४—कृतयुगीकृतः ॥२०॥ तस्यैका ध
२५—र्ममालाख्या दीपमालाह्वयापरा ।
२६—उभे देव्यौ विराजेते विष्णोर्भू मिश्रि
२७—याविव ॥२१॥ भित्तूणां द्विजध
२८—र्मभाणकाणां सूत्रधारका
२९—णां च । निजराज्ये सर्वकरास्ते
३०—नाचंद्रार्कवारकं त्यक्ताः ॥२२॥
३१—बालसरस्वतिसुमति ः प्रशस्तिमक
३२—रोदिमां कला निपुणः । अलिखज्ज
३३—यासद्दः सुधीश्चतुरः शिवराजसू
३४—त्रधारश्च ॥२३॥ म्रढषिसूर्यगणाब्दे
३५—शाके ज्येष्ठस्य मेचके । रुद्राद्दे भानु
३६—वारेसौ कोटिस्तंभोधिरोपितः ॥२४॥

[ पश्चिमपट्टि मोटाइमा १—] श्रीशाक १२७६ [ अनुवाद—दक्षिणपट्टीको ]

शरीरका माथिजस्ता सहस्रदल कमलमा प्रणववाच्य ईश्वर मैं हूँ। ॐ स्वस्ति–भलो छ। कमलले शोभित मुख भयेको मदजलले भिजेको सुँडो भयेका गणेशको सेवा गर्छु। जो चार भुजा धारण गर्छन्, भलो भावना गर्दा प्रजालाइ धर्म, अर्थ, काम, मोक्ष चार पुरुषार्थ दिन्छन् र शिव पार्वतीबाट भयेका मानियेका तथा अभिभावित सुरक्षित छन् ॥ एवं प्रफुल्ल पद्मजस्तो सुन्दर भयेका—ॐ मणिपद्मे हूँ—भन्ने मन्त्र जपी रहेका, अहिंसा आदिले प्राणिहरुलाई अभयदान ज्ञानदान इत्यादि दिने ठूला दानी बुद्धको सेवा गर्छु। जो निर्दोष र चतुर छन्, प्रजाका चार पुरुषार्थ धारण गर्छन्, र शिवजस्तो अचल भावना गरिन्छ ॥१॥

आदित्यवंशमा राजा आदिपाल भये। आदिपालका पुत्र राजा अमरपाल भये। अमरपालका पुत्र राजा जयपाल भये। जयपालका पुत्र राजा विजयपाल भये ॥२॥ विजयपालका पुत्र राजा वीरपाल भये। वीरपालका पुत्र राजा विक्रमपाल भये। विक्रमपालका पुत्र राजा श्रीपाल भये। श्रीपालका पुत्र राजा धीरपाल भये ॥३॥ धीरपालका पुत्र राजा सोमपाल भए, सोमपालका पुत्र राजा सुर्यपाल भये। सूर्यपालका पुत्र राजा समुद्रपाल भये। समुद्रपालका पुत्र राजा सुखपाल भये। सुखपालका पुत्र बुद्धिमान् प्रसिद्ध अधिराज गृहपाल भये। गृहपालका पुत्र राजा श्रीमान् महीपाल [अश्पाल,गजपाल उत्तम हात्ती पाल्ने] भये। तिनले युद्धमा वैरीहरुलाइ जितेर गोहविषय गर्व्याङ, कोट माथि गोटीचौर १ मा बसलि राजधानी गरेर [illegible] धनी राजाहरु संग का बाँधेर घोडा आदिको कर लिए ॥ ५ ॥ छैटौं श्लोकका अक्षर गोटालाइहरुले राइखेलने गरेका माझमा परेर मेटिएकिन आँटिका हुनाले स्पष्ट भयेन, सत्यमा निष्ठा भयेका इत्यादि अलि २ अर्थ झल्कन्छ ॥६॥ जुमकार सिप्कोट जुफाल अथवा जुमचौर छु म भन्ने राजधानी गरेका राजा विश्वपाल भये। तिनले शत्रुहरुको स्तम्भन गर्ने हुनाले धनधान्यसमृद्ध ठूलो राज्य पाए ॥७॥ टिनरेन्द्रकुल-[जुमला] शाखामा जन्मेका राजा जीवपाल भये। नेता नामका महाराजाधिराजले चिरकाल सम्म नेता स्वनामधन्य,जुमला बारबीसदरा शिखरगेला औलगेला राजधानीमा बसेर राज्यको पालन गरे ॥८॥ हिमालय पर्वतलाई उत्सवमय पार्दै रागी सङ्गीतविद्याविशेषज्ञ राजा सरल भये। तिनबाट महायशस्वी राजा श्रीजाथ भये ॥९॥ तिनबाट श्रीमान् राजा पुण्यमल्ल जन्मे। तिनकी महरानी उत्तम कुलमा जन्मेकी साध्वी सती खञ्जनमाला भइन् ॥१०॥ इन्द्र र इन्द्राणीका लक्ष्मीवान् श्री र सौन्दर्य भयेका जयन्तजस्ता, राजा पुण्यमल्ल र रानी खञ्जनमालाका जेठा छोरा श्रीमल्ल जन्मे ॥११॥ अब खारिप्रदेश ताकलाखारमा बसेर जो जावेश्वर [जावा सुमात्रा आदिका अधीश्वर हुन गए] हुन गये, ति श्रीनागराजले सेँजापुरी=शिञ्जा=सिँजा लामाथाडा राजधानीमा स्थिति बाँधे ॥१२॥

( उत्तरपट्टिको )

ॐमणिपद्मे हूँ। ॐस्वस्ति। ति नागराजबाट राजा चाप भये। चापबाट राजा चापिल्लभए चापिल्लबाट राजा क्राशिचल्ल भये। क्राशिचल्लबाट राजा क्रापिच्चल्ल भये। क्रापिचल्लका पुत्र राजा क्राचल्ल यस क्रमले राजा भये ॥१३॥ क्राचल्लका पुत्र राजा अशोकचल्ल भये। अशोमल्लले दशैदिशाका मित्रहरुमा क्षमारुपी लहराको विस्तार गरे कवीर

...ला आज भन्दा अलि र अन्तर छ । यस लेखमा ज आयेन । स्वाहक प्रति अनेक आयेनन । शाक अङ्कमा पनि लेखएर काले ७ को अंक चिनिन्छ, अरु अङ्क प्रायः समान छन् । हल् मकार छैन । 'दिग्यदपूर्वं कश्यपु प्रचद्दते' गनुं न पर्दोधु भनेर नामानुकूल वृत्तपरिवर्तन गरि यो ऐतिहासिक प्रशस्ति लेखियेको छ । ॐ मणिपद्मे हुँ को अर्थ प्रायः अभिलेख हरुमा मणिमाला पत्रपत्र आदि द्वारा व्यक्त गरिएको हुन्छ । ॐ स्वस्तिको वैदिक शैली र ॐ मणिपद्मे हुँको बौद्धी शैली थाने छन् । गणेश र बुद्धको वन्दना श्लोकमा गरिवेको छ । भिक्षु र द्विजधर्म साथै छन् । त्यो बेला आत्मविस्मृतिजन्य भिन्नता र हानिकारक संकीर्णता रहेन छन् । राजा सबैका साझा भन्ने अनुभूत नैतिक उक्ति चरितार्थ भै रहेको हुदै छ ।

यो कोटिस्तम्भ १ विता जति उत्तर ढलकेको थियो । बाटो हिंड्ने हटाऊ र स्थानीय जनताका सहयोगबाट २०१२ मार्ग २५ गते सोभ्याइयो । यसको आधार कूर्मशिला फुटालेको र दक्षिणपट्टि लेखका माझमा धेरै पङ्क्ति मेटि सकिन थाँटेका छन् । उत्तरको लेख अखण्ड छ । यसको हेतु स्थानीय वृद्धजनश्रुतिबाट यस्तो रहेछ—'६०।७० वर्ष भन्दा अघि धनभ्रान्तिले हो कि ? किन हो ? कसैले खनिमा खनेर तेढ्याएको थियो । धेरै दिन तेसै रहदा भैंसी खालहाली गोठाला केटाकेटीहरुले ढुङ्गो माटो हालेर केतुक्याका खाल्डामा रहीखेलने गरेका हुनाले अक्षर मेटिन गये । पछि कसैले ठड्याये । अलि बाङ्गो रहन गयो' इत्यादि । माथिभन्दा आधा जति गाडियेको छ । यौटा विशाल मोटा शिलाका माझमा छेडेर खम्बलाई टम्म पारी उनेर खडा गरि माथिबाट अर्को कूर्मशिलाले अचल पारेको रहेछ । अरु पनि ठूल्ठूला अभिलेख स्तम्भहरु यस कर्णाली प्रदेशमा यस्तै प्रकारले ठड्याइयेका छन् । तर धेरै दिन देखि इनको उपेक्षा हुँदै आयेको छ । ठाउँमा आयेर लेखशैली हेर्दा कोटमाथि पृथ्वीमल्लभवनद्वार दक्षिण तिर रहेछ भन्ने थाहा हुन्छ ।

'आदित्यवंशेभवदादिपालः' भनेर वंशावलीको संक्षिप्त उपक्रम देखाइयेबाट आदित्य (सूर्य) वंशका आदित्यपदधारी राजाहरुका पाल, राज, चल्ल (अचल) र मल्ल पद हुँदै आयेका देखिन्छन् । आदिपाल । अमरपाल । जयपाल । विजयपाल । वीरपाल । विक्रमपाल । श्रीपाल । धीरपाल । सोमपाल । सूर्यपाल । समुद्रपाल । सुवपाल । गृहपाल । महीपाल । ... । विश्वपाल । जीवपाल । भीगेला । सरल । श्री बाव । पुण्यमल्ल । भीमल्ल । जावेश्वर नागराज । चापराज । चापिल्ल । क्राशिचल्ल । क्राचिल्ल । क्राचल्ल । अशोकचल्ल । जितारिमल्ल । अक्षयमल्ल । अशोकमल्ल । आनन्दमल्ल । रिपुमल्ल । संग्राममल्ल । जितारिमल्ल । आदित्यमल्ल । कल्याणमल्ल । प्रतापमल्ल । पुण्यमल्ल । पृथ्वीमल्ल । यति नाम प्रावुत छन् । महीपाल पछिका २।३ नाम मेटियेका ठाउँमा अस्पष्ट छन् । एक नामका अनेक राजा छन् यो संक्षिप्त प्रशस्ति जसबाट भिक्यो त्यो बृहद्वंशावली भेटिएको छैन । कर्णालीप्रदेश भोट र चीनमा राम्रो सँग खोजे पाइयेला कि ? यशःपाल प्रभृति पालवंशका राजाहरुका भग्नदुर्गहरु पश्चिममा होशियारपुर माथि जेनो टाँडा प्रभृतिमा र पूर्वतिर पाल्पा ... तथा केदारखण्ड आदिमा पारयेका छन् । पाली र पालपा नामको व्युत्पत्ति पनि पालवंशबाट भयेको हो । पछि २ अनेक पद फेरिन गयेका छन् । कपिलवस्तु लुम्बिनी निग्लिवाका स्तम्भमा माथि रिपुमल्ल र सङ्ग्राममल्ल प्रभृतिको उल्लेख छ । ... अशोकको अभिलेख छ । यसै गरि काचल्लदेव जितारिमल्ल अशोकमल्ल आदि आदित्यवंशजहरुका अभिलेख छन् ।

## पुण्यमल्लपुत्र पृथ्वीमल्लको ताम्रपत्र

(२) ॐस्वस्ति । अनिधनसमिद्धोद्गच्छज्ज्वालाजालजिह्वालप्रत्यक्षवैश्वानरत्रयाधिष्ठानपरमपावनश्रीदुल्लंध्यनगरे । यदृच्छशावतारापारसंसारसागरोत्तारसेतुभूतापघनश्रीघनाराधनाधिगतप्राज्यराज्यरत्नाप्रमप्रचंडनिजभुजदंडस्वाहमलमाक्रान्तविराटपीठाधिष्ठितप्रतिष्ठितदेवतापरिचर्यापरायण । राजावजिनारायण । गार्ग्यायणगोतमा दर्पणोद्राजकीर्तिराज्यप्रवीणप्रष्ठ । अपाढराजजगदय्येष्ठ । अदीचितराजदीक्षाशिक्षागुरु । राजतारातरणिप्रभृतिविरुदावलीविराजमानपरमभट्टारकमहाराजाधिराजपरमेश्वरश्रीमत्पृथ्वीमल्लदेवपादाः सान्तःपुरसपरिवाराः सकुमाराः सर्वत्र विजयिनः ।

शाके १२८० श्रीसंवत् १४१५ मार्गशिरवदि १२ सोमे । राजको आदेस् ।

पलांताको मभाडो आलो०॥ हायेको छन्दो मगशिर मास संक्रान्तिका दिन सोमवार जि हि वैश्वानर हरिशंकर यात्रा करि अवन्या हुँदा तिले कुसे सहित संकल्प पालि सर्वदोषविशुद्ध सर्वबाधाविनिर्मुक्त ताँबाशासन करि देउराज जोईसि ... पुण्य कि अवन्या छुं । भाँगा गुम्पा कड्ता पालो किँउ पुलो मौनि चौंनि डंड मोड अपुतालि गुह्यालि पेटाजि ... आदि छत्तीस कर अकर करि पसा कि अवन्या छुं । श्रीपृथ्वीमल्लकि शाखा पसा करि अवर्न । देउराज जोइसिकि शाखा

नाफ्ज का अधिकारि । कार्कि प्रति ॥ अँवर गाउँको बेलकाँटियो निभौनके गर्के सहित एकत्र आलो १॥ सर्वकर अकर सर्व दोषविसुद्ध कि जैवद्ध जोइसि पसा कि अकर्यां छुं। मुडालि पेटालि मोड् अपुतालि । चारि । दोष सबै छाडि अकर्यां छुं । सपाधा धुंपया छडिया कुत् भात् । पोटलो पिटायो कोदि लैन न पाव जो भाषा पृथ्वीमल्ल राइका पसा कि थि । तै भापा म पसा कि अवर्यां छुं । यो भाषा अभयमल्लकि छाखा पसा कि अजम । जैवद्ध जोइषि । महिराज जोइसिकि साखा चेलीको चेलो आदि भुंच । अत्र साक्षिण । सूर्याचंद्रमसो रत्नत्रयं । भूमंडलका साक्षिः जितवम राउला सिरिवद्ध राउला राजवद्ध राउला । पेलक् अजु खड्गाहा लेखक धर्मराज जोइसि ।

[ इत्यादि शतसहस्र शिलापत्र कनकपत्र ताम्रपत्र अप्रकाशित सङ्गृहीत हामि सित छन् । धेरै असङ्गृहीत स्थानीय जनता सित छन् । असंख्य नष्ट भै सके । सैजा=सिजा जुमलामा छ । दुल्लइ-दुल्लु दैलेखमा छ । उदुम्बरपुरी=डुम्राकोट डोटीमा छ । उकु-उकुबैतडी धारचूलामा छ । कर्णाली काली कौशिकी गण्डकी आदि प्रदेशहरुमा यस्ता असंख्य लेख भरियेका छन् । इनैको संहिता इतिहास-प्रकाश हो । ५ भाग प्रकाशित २५ भाग अप्रकाशित सङ्गृहीत र ३४ भागको सङ्ग्रह शेष छ । सबैको सक्रिय सहयोग चाहियेको छ । ]

( अनुवाद )

ॐ स्वस्ति ॥ सकल भुवनको भार वहन गर्न धैर्यका प्रचुरताले भएका कीर्तिसमूहले अशेष व्याप्त गरे जस्तो हिउँले गोरो- शरीर भएका शेषनागको अर्को शरीर धारण गरेजस्ता हिमवान् (हिमाल) का कटीप्रदेशमा वर्तमान, तल झरेका सेता दुकूलको शङ्का उत्पन्न गर्ने श्वेतसरित्–सेतीगङ्गाले अलङ्कृत वरिपरिको प्रदेश भयेको उदुम्बरपुरी-डुम्राकोट डोटीमा अधिराज भयेर बस्ने, अतुल भुजबलले विजित शत्रुसैन्यकी कामिनी जनका नयनबाट निस्केका जलका भलले सुदूरपर्यन्त पुर्‍याइयेका, निभाइयेका अरुका क्षितिपतिहरुका प्रतापको आगो भयेका, प्रचण्ड भुजदण्डले कुण्डलित गरियेको कोदण्डखण्ड-अर्धचन्द्राकार धनुष्काण्डबाट निस्कीरहेका बाणहरुका समूहका प्रवाहले जर्जर पारेका शत्रु भयेका, शत्रुहरुले वर्षायेका बाणरूपी जलधाराको उपसंहार गर्ने पृथ्वी र पृथ्वीधर हिमवान्को भारधारण गर्ने गोवर्धन गिरिधारी बालगोपाल भयेका, काम्बोज वानायुज बाल्हीक पारसीक आदि देशहरुले उपहार गरेका उत्तम अश्व रत्न संचका धारक समुद्र भयेका, विभिन्न रङ्गरूपका बलिया सामन्तराजाहरुका मण्डलका मुकुटहरुमा भूषित चरण कमल भयेका, सपरिवार श्रीमान् अभयमल्ल चिरकाल पर्यन्त विजयी होउन् ।

श्रीशाके १२९८ फाल्गुनवदि बहुलदिवा ७ सप्तमी रविवारका दिन राजाका आदेश ।

अछाम बाजुराका अधिकारी र कार्की–निजामति र जङ्गी कर्मचारी प्रति ॥आला॥ एकखेत–१०० मुरी माटो अँवर गाउँका बेलकाटियो निभौनका गढा सहित एकत्र आलो १॥ डेढ खेत-१५० मुरी माटो सर्वकर अकर सर्व-दोषविशुद्ध दण्डकुण्ड आदि दोष रहित गरि जैवद्ध जोइसिलाई प्रसाद-बिर्ता गरि दियेको छु । व्यानभारा अपुत-हत्यारा मध्यो अपुताली चारी आदि सबै दोष छाडि दियेको छु । थपुं हालने डाला आदि दिने कलियो हालने छल भात दूशी टीका बथारा पिटायो कसैले लिन नपावोस् । जो भापा-आफल गरि बिर्ता श्रीपृथ्वीमल्ल राजाले प्रसाद गर्नु–प्रसन्न भै दिनु भयेथ्यो । त्यै भाषा मैले प्रसाद गरेको छु ( बुबाको भाषा थामेको छु । ) यो भाषा अभयमल्लका शाखा सन्तानले प्रसाद गरम् प्रतिपालन गरून् । जैवद्धजोतिषी महिराज जोतिषीका शाखा सन्तान छोरीका छोरा आदि उपभोग गरोस् । यसमा साक्षीहरु सूर्य-चन्द्रमा तीनै रत्न (बुद्ध धर्म सङ्घ) । भूमण्डलका साक्षी हरु-वीरवर्मा रावल श्रीवर्मा रावल राजवर्मा रावल पेलक् प्रेक्षक-निरीक्षक अजखड्गा, लेखक धर्मराज जोसि ॥

यो ताम्रपत्र नौखुवा अछाम बाजुराका राजा गजेन्द्र बहादुरसाहका पासमा छ । यस्ता अरु ताम्रपत्र कागतपत्र पनि छन् । एवं सहस्रौं कनकपत्र ताम्रपत्र कागतपत्र भासिका सूपकार वंशावलीहरु सङ्गृहीत छन् र सम्प्राप्त छन् ।

जगज्ज्येष्ठ अपाहराज पृथ्वीमल्लले कर्णालीप्रदेश दुल्लइ्य नगरका कोटिस्तम्भमा पूर्वजहरुको नामावली वंशावली 'आदित्यवंशेभवदादिपालः' भनेर यसरी दियेका छन्—



# पृथ्वी मल्लको ताम्रपत्र

यो ताम्रपत्र संधिसंग्रहको पे.नं. ७७०/७७१ मा छ । ॐ स्वस्ती अधिधन सोम छोद गद्रन्जाल जालजी ह्राव प्रत्यक्ष वैशेनर त्रयाधिष्ठान परम पावन श्री दुलन्ध्य नगर गरुड ध्वजा वा सारा पारस्थार सागरोत्तर, सेतुभूता पधन श्री धनाराध नांध गतप्राज्य राज्य रक्षाक्रम प्रचण्ड निजभूज, दण्ड चक्रित समाक्रान्त बिराठ पिठा धिन्दित प्रविष्टि तेष्ठ देवता परित्यार्थ प्रारायणराजा बलितनारायण मान्धारण नाकाहि प्रणत राजनीति शास्त्र प्रविण प्रष्टा अपाड राज जगजेष्ठ, अंदाक्षिरा, राज दिशागुरु, राजतारा तरणि प्रभृति विदा वलि, बिराजमान प्रमभट्टारक महाराज धिराज परमण्वार श्री मान श्री पृथ्वी मल्ल देव पादाशान्त परम परि तारा सकुमार सर्वेत्र विजयीन श्री शाके १२८० श्री सम्मत १४१५ मार्गसिर वांद १३ सौन राइको आदेश पालाताको आलो हाथैको छन्दो मसिर मास सक्रान्ति क्रा दित सम्चार तिहि वैशाख नरहरि शकरी मारकी अकन्या हुँदा तिलेकुसे सहित संकल्प धाली सर्वदाश विरुध सर्वबाधा विनिब मुक्त तावा श्यसलकरि देउराज जैसी पासाकि अक्न्याछु। फापा गुफ्या कटतापाखो जितपुलो मानी चौनिङड माड अपुतालो मोडाली पैठाली सर्वेछाडी छास तम कर अकर करिपासाकि अक्न्याछु । श्री पृथ्वी मल्लको आपापासा करि अक्ना, देउराज जैसीकी शाखा चोली , चोलिको भूजपत्र दक्षिण सूर्य चन्द्र गसेश बृहस धर्म आमा त्या जर्कीलिह राउला विस्पति राउला किदि तेजपाल, वासु भंडारी शक्तु जैसी सकरध्वज भण्डारी लेखक जुठा जैसी ।

अनुवाद

ॐ स्वास्ति ईन्धन ध्यूतेल दिवालो दाउरा आदि विना सभिद्ध आत्मस्थान उत्पन्छुन उमोनरुली रहेका ज्वालाका जालले, जिहलभएका ३ प्रतक्ष वैशानर निरस्थान, नाविस्थान र पादस्थान स्थानमा, सबप्रति वैधिक देवता अग्निको आधिस्थान स्थारि निवास हुनाले परम पावर अलांघित दुलर्घनगर श्री सम्पतन दुलु राजधानीमा विष्णुका अवतार अपर संसार सागरबाट पारिजान साधुभएका निलकल मस शाक्य सिड्बद्ध आरथानाले अधिकार गरेका प्राज्य राज्यको निशाल गयाजसको रक्षा गर्ने समर्थ प्रचण्ड आफ्ना भुजडण्डका चौडिमा उग्रताले भित्रै सर्वेतिर रासो सग आकरमण गरियको निशाल देशका पिठ सिगासनमा आधष्टीत भएर विराजमान भएका प्रतिष्ठा गरिएका ईष्ट देवताहरुका सेवामा तत्पर भएका राज बलि नारायण राजा बलिराजा हरुको चक्रमा नायण समान भएका इत्यादि , अनुसंरुक ऐतिहासिक पदभएका मान्धाता गौगम बृह आदि राज जोतिज्ञहरुले बनायका राजनीतिज्ञहरुले बनाएका अपाड राज राजेष्ठ जगतभरीमा सब प्रकारका जेष्ठ इत्यादि अनुसंध्यय लोकोत्तर पदवि भएका अंशक्ति राजा दिशा, शिक्षा दिने गुरु भएका राजाहरुलाई सोधर्म दिक्षा र सवप्रकार शिक्षा दिक्षा दिने गुरु भएका राज तारा तारणी प्रभृति विरदावलि विराजमान राजाहरु रुपि ताराहरुका मंडलमा सूर्य भएका इत्यादि अनवर्थ(अनेक) सिरुद्धवलि कीर्ति मालाले विराजमान परमभट्टारक शवप्रकार शमर्थ पुजनिय श्री मान पृथ्वी मल्ल देव शान्त पुरसपरिवार राजभोजवत स्थल महारानी प्रभूती परिवार र जनपदस्य ग्राम कुटुम्भ परिवार सहीत रा कुमार यूवराज आदि (राजकुमार) समेत सर्वत्र विजय हौ (होवन) श्री शाक्य १२८० वि.स. १४१५ मसिर वदि, सोमबारमा राईको आदेश राजा पृथ्वी मल्ल देवा देशका आज्ञा छ ।

जुम्ला पलातादरा मध्यमाझको भोक गरि राखेको रैकर खेत आधा ५० मुरी माटो १ मसिर मासमा संक्रान्तीका दिन सोमबार मा तीनै वैशानर सिरस्थान नाविस्थान र पादुका स्थानका तिनै ज्वालाइ हरिशंकरिमा आस्विन कृष्णपक्ष हासिगारी सकेपछि तिन कुरा सहीत शंकल्प हालेर सर्वदोष विशुद्ध सर्व बादा विनमुक्त, पूर्व कनकपत्रबत, ताम्रपत्रको शासन गरेर देवराज जइसी को दरसन्तानले राखने, फापागुफ्या कुइता पार्नी

